मा
सि
क

# कोङ्पी प्रकाशन-१

## श्री ५ बडामहारानी ऐश्वर्यराज्यलक्ष्मीदेवी शाह

### शुभ-जन्मोत्सवाङ्क



# कोङपी । KONGPIE

[मासिक प्रकाशन]


कार्तिक, २०३७ — November, '80

वर्ष-१, अङ्क-१ — कोङपी/KONGPIE — VOL. 1, NO. 1



*प्रकाशक तथा सम्पादक*



**घल राई**

*व्यवस्थापक*



**सुखदा राई**

*प्रतिनिधि*



**तिलक चाम्लिङ**
**जे.छिरिङ लामा: सोलुखुम्बू**
**भियतकङ किरावा: मोरङ**

'कोङपी' कार्यालय:
२१/७७ बागबजार, काठमाण्डौं, नेपाल



मुद्रक: कंकेश्वरी प्रिन्टिङ प्रेस
१४/८५४ यटखाबहाल, काठमाण्डौं

### *विशेष कोङपी शुल्क:*

संरक्षक शुल्क रू० ५,०००।–
आजीवन सदस्य रू० १,५००।–

### *विज्ञापन दर:*

| | | |
|---|---|---|
| अन्तिम कभर पाता पूरा | | २०००।– |
| ,, ,, दोश्रो | ,, | १५००।– |
| साधारण पाता | ,, | १०००।– |
| ,, ,, आधाको | | ५५०।– |
| ,, चौथाई भागको | | ३००।– |
| ,, आठ वाँ भागको | | १६५।– |
| ,, दश वाँ भागको | | १५०।– |

काठमाण्डौं बाहिर 'कोङपी' को निमित्त सम्पर्क राख्नुहोस !

– सिर्जना स्टोर्स, १/९३ प्रकाशपथ इलाम
– जोशी पुस्तक भवन ५-नारायणगढ-१ भरतपुर, चित्तवन
– गणेश पुस्तक भण्डार मेनरोड, बिराटनगर
– छिनामखुले राई, त्रूनाई
– जनता पुस्तक भण्डार भैरहवा
– मदन राई, चौकीवारी-१९, धरान
– बिश्वहाङ राई, हतुवा भोजपुर



RATE

| | | |
|---|---|---|
| Nepal | NC | Rs. 10 |
| India | IC | Rs. 10 |
| Hongkong | | HK $ 5 |
| Singapore | | S. $ 5 |
| Brunie | | B $ 5 |
| U.S.A. | | U.S. $ 3 |
| U.K. | | £ 2 |

### सूचना

आगामि अङ्कदेखि पाठक प्रतिक्रया, प्रश्नोत्तर, पत्र-मित्र, हस्यौली, उखान र गाउँखाने कथा जस्ता सामाग्रीहरू पनि समावेश गर्ने निधो भएको हुँदा सामाग्री पठाउन हुन अनुरोध छ ।

**सम्पादकको कलम:**

# पत्रिकाहरूको स्थिति: वातवारण: सांस्कृतिक विविधता:

## चरित्र – चाहना: परिकल्पना:

## गर्भकालीन व्यवधानहरू: अनिश्चितता: जन्म र उद्देश्य: सङ्कल्प:

१) **ग**मलामा पनि फूलहरू रोपिन्छन् । तर, त्यस्ता फूलहरू मालिकको निरन्तरको सिंचनबाट मात्र बाँच्न सक्तछन् । सुवासना फैलाउन सक्नेगरी स्वछन्द रूपमा बढ्न र फक्रिन सक्तैनन् । मालिकले बिर्सिदिदा वा छोडिजाँदा त त्यसै पनि मर्दछन् । एकाध चाँही दिउँसो ओइलिने र साँझपख पूनर्जीवनको ढुकढुकीसँग सङ्घर्ष गर्ने गर्दछन् । विहान जब जब निर्दयी घामको चर्को राप चर्किदै गएको हुन्छ, फेरि ओइलिन थाल्दछन् र साँझ पर्नु भन्दा अघि नै कतिपय मर्दछन् । गमलाको घेराउमा बाँच्ने फूलहरू बाँच्नुसँग सधैं जसो यसरी सङ्घर्ष गरिरहेका हुन्छन् । ठीक, त्यस्तै यहाँका पत्रिकाहरू आज बाँच्नु र मर्नुको सङ्घर्षमा ओइलिने र ब्यूँझने गरिरहेका देखिन्छन् ।

वातावरणको सम्बन्धमा यो भन्दा बढी ब्याख्या गरिहनु परोइन ।

लाग्छ; शायद यही भएकोले सम्पादकीय कोर्ने परिस्थिति जुक्टयाउने जमर्कोको क्रममा होला; यहाँका मालीरूपी पत्रकारहरू बेला-बेला ठर्राको ग्लाससँग आत्मकथाहरू अभिव्यक्त गरिरहेका हुन्छन् । वास्तवमा यो स्थितिको आज ठीक कल्पना गर्न सम्भव छैन । भनौं अब—त्यस्तोबाट पाउन सकिने कुरो के नै हुन सक्ला र ? प्रसङ्ग क्रममा भूल्न नसकिने जटिल विषय मध्येको यो एक यहाँको मौजूदा विडम्बना हो ।

२) **हु**नसक्छ, यो अवस्थाको मुकाबला गर्ने वातावरण यहाँ जन्माइएको छैन र त्यसैको परिणामत: "पल्लो गाउँको तारे, यो गाउँको साँढे" हुने रोगका शिकार पनि कतिपयलाई बनाइने वा बनिने गर्दछन् ।

३) **कि**न्तु, ढिस्का-थुम्का, खोंच-बेँसी, लेक-हिमाल, पहरा-कन्दरादि प्राकृतिक बनौटको अनेक रूपले सजिएको यो नेपालमा अनेक सँस्कृतिहरू छन् । पिठिउँका नूनेढाकरहरू रस्सीको सहाराले नदी पार गराउनु पर्ने, जलुका र झयाउ जस्ता जङ्गली झारहरू खाएर प्राण धान्ने, गीठा र भ्यागुरहरू जुक्टयाएर प्रेम-प्रसङ्गहरू वैधानिकता प्रदान गर्ने; इत्यादि प्राचीनतम् संस्कितिहरू यहाँ मौजूदा रहेका छन् ।

अर्कोतिर, यही आदिम संस्कृतिहरू बीच कार, हेलिकोप्टर जस्ता अत्याधुनिकतम् ढाँचाहरूको प्रयोग गर्ने संस्कृति पनि पाइन्छ । गुफामा बस्ने सस्कृति यहाँ छैन । तर, ओडारको सहारामा बाँच्ने सस्कृति राउटेहरूले संचित गरिराखेकै छन् । लिफटवाला र वातावरणाकूलित बंगलामा बस्ने सँस्कृति पनि यहाँ नभएको होइन । वास्तवमा,

पाषाण युगीन संस्कृतिदेखि लिएर राकेट युगका संस्कृतिहरू बीच हामी यसरी बाँचेका छौं ।

४) **य**सरी सांकृतिक विविधताको कारण ओल्टो-कोल्टो, कुना-कन्दरातिर हेर्न र छाम्न पर्ने कुराहरू यहाँ धेरै हुन गएका छन् । अतः एकसुरमा सिङ्‌राउँदै हिड्ने साँढे-रूपी मष्तिस्कबाट मात्र यहाँ सम्पूर्णता नसमेटिने कुरो यसबाट प्रष्ट हुन्छ ।

वास्तवमा, यत्ति भनेरै मात्र पनि पर्याप्त हुँदैन । समाजका चाहनाहरू असीमित हुन्छन् र ती कुराहरू सीमितताको घेराभित्र कदापि गुम्साइरहन सकिन्नन् । कारण, चाहनाहरू मौठ्या हुन्नन् । यी चाहनाहरू कृतिम तरीकाले नकारेर तकारीन पनि सकिन्नन् ।

किनकि, चाहनाहरू शुरू-शुरूमा समस्या जस्ता देखिन सक्तछन् तापनि कुट्टा वा विकास विरोधी हुँदैनन् । प्राणी मात्रको अन्तिम लक्ष्य विकास वा उन्नति गर्नु हो । मानिस भएर जन्मेपछि यसको विपरीत दिशामा जान सकिन्न । विकासको कुरामा कुण्ठा वा वाधा डाल्न सकिन्न भन्नु त्यसैले प्राकृतिक देनको मर्म सकार्नु भन्नु हो । चाँहनाहरू यसै तथ्यसित सम्बन्धित भएर जन्मेका हुन्छन् ।

५) **मू**लतः यी प्रसङ्गहरू नै "कोङ्पी" को परिकल्पनाका खास आधारहरू हुन् । ढाँटेर ढाँटन सकिने र ढाँटनु पर्ने विषयहरू यहाँ केही छैनन् ।

६) **अ**पशोस ! यथार्थता खोल्न लाज नमान्ने हुनुपर्दा यसो भन्न कर लाग्छ कि गर्भ - प्रवेश - कालबाटै 'कोङ्पी'ले अनेक घटना सकार्न पऱ्यो । पहिलो पटक केहि मुद्रण भएको अंश अन्यत्रै भेजो लगाइयो; किनकि, प्रशासनिक निकायबाट प्राप्त गर्नु पर्ने वैधानिकता समयमा प्राप्त गर्न सकिएन । अतः प्रकाशन गर्न नसकिने भयो ।

दोश्रो पटक; प्रेसलाई जिम्मा दिएको ७ वौं दिनमा त त्यसो मात्र भएन । मालीको उमेदवार हुन तम्सेका स्वयं आफू नै डाक्टरको प्रेस्क्रीप्सन बमोजिम "Poison [विष]" भनिने; तर, "आफू+वारदातसँग ••• हरू" ले "तातो पानी" भन्नु पर्ने [तर, अस्पतालबाट डिसचार्ज हुँदा सिधै प्रहरी स्टेशन लगियो र "बाँच्नुदेखि दिक्क लागेर म आफैले यसो गरेको हुँ, आइन्दा यसरी आत्म-हत्या गर्न प्रयास गर्नें छुइन" भन्ने कागजमा सही नगर्दा ड़ेरा पुग्न २ दिन लाग्यो] को असरको कारण अस्पताल पुग्न पऱ्यो । वीर अस्पतालको वेड नं ५२ को "Serious Patiant [ सिकिस्त अवस्थामा रहेको विमारी]" भएर पशुपतिघाट जाने कि घर फर्कने भन्ने विषयको अन्तिम स्थितिको सङ्घर्ष गर्दा-गर्दै लामो समय बित्न गयो ।

हुन त धारामा थापिने पानी र सो सँग मिलाइएको 'एशिड' कि कुन्नि के भन्छन्; 'हेर्दामा छुटिन्न' रे, त्यस्तै गन्थनसँग मन्थन नभएकासँग यी सब गन्थन गरेर मर्म छुटिने होइन । अतः यी सब गन्थनले यहाँ कुनै अर्थ राख्दैन । किन्तु, अर्थै राखोस भनेर प्रसङ्ग जोड़ेको पनि अवश्य होइन । गमलामा रोप्ने प्रयत्नमा लाग्दा-लाग्दै स्वयं माली••••••भने समाज या पाठकले 'कोङ्पी' बाट अपेक्षा गर्न सक्ने खास कुरो त के नै हुनसक्दछ र ? किन्तु, "निरर्थक" भन्ने शब्दको पनि 'अर्थ' हुन्छ भने निरर्थकको पनि अवश्य केही अस्तित्व हुन्छ; बस ! यहीसम्मको दृष्टिकोण राखेर "कोङ्पी" रूपी फूलको वियाँ श्री ५ ऐश्वर्यको ३२ औं जन्मोत्सवको शुभ - मुहूर्तको साइत पारेर गमलामा सारिएको छ, तेस्रो पटकको प्रयत्नवाद !

७] **बि**याँ सर्ने हुन् होइनन्, अनि सरेमा पनि खड़ेरी र बतासले हुर्कन, मौलाउन पाउने हुन् कि होइन; सो विषयमा आज यसै भन्न सकिन्न । गाड-चास अथवा सिंचनको लागि हर-प्रयत्न गर्नु मालीको दायित्व हो, सो अवश्य नै हुन्छ । शङ्का नगरौं ! किन्तु, प्रयत्न मात्र सबकूछ होइन । मूलतः वातावरणको भूमिका महत्वपूर्ण हुन्छ र त्यो विशेषतः शुभेच्छुकवर्गको शुभेच्छामा बढी भर पर्दछ भन्नुमा अर्घेल्लो हुँदैन ।

८) **भ**ला, पहिलो प्रयत्नमा; सोंचे जस्तो सामाग्री जुटाउन सकिएन— तापनि अहिलेको सन्दर्भमा "कोङ्पी" केही उद्देश्य लिएरै देखापर्न खोजेको हो भन्ने कुरा यहाँ स्पष्ट पनि गरूँ ! ती उद्देश्यहरू यी हुन्:—

(१) देशको अखण्डता, सार्वभौमिकता र राष्ट्रिय एकताको भावना अरू मजबूत गराउन र राष्ट्रियताको सवाल उच्च बनाउनमा योगदान पुऱ्याउन प्रयत्न गर्ने;

(२) इतिहास, भाषा, सँस्कृति भनेका कुराहरू देशको गौरव बढाउनमा सघाउ पुऱ्याउने अमूल्य निधिहरू हुन् । अतः हराउँदै गइरहेका इतिहास, भाषा, संस्कृतिहरूको खोजी जगेर्ना गर्ने सम्बन्धमा सकेको प्रयास गर्ने;

(३) सत्यलाई 'असत्य' र असत्यलाई 'सत्य' भन्न खोज्ने प्रवृतिले मानव नैतिक मूल्यमा ह्राश ल्याउँछ । नैतिक मूल्यमा ह्राश आयोभने— सामाजिक स्थिरता खलबलिने डर हुन्छ। अतः नैतिक मूल्यको पूनस्थापनाको लागि सक्दो प्रयास गर्ने; इत्यादि ।

९) **कि**न्तु, कुनै पनि कदमको आफ्नै प्रकारको निहीत उद्देश्यहरू हुनु स्वभाविक हो, सो बारेमा भट्टाईरहन झन्झट नपरोस भन्ना खातिर मात्र यी सामान्य सिद्धान्तगत उद्देश्यहरू यहाँ प्रस्तुत गरिएका हुन् । शुभेच्छुक या पाठक–वर्गबाट आउन सक्ने अमूल्य सुझावहरू नहुल्न छेकावार लाउन खोजिएको भने अवश्य होइन । समावेश गर्न छुटेका अथवा समावेश नगरी नहुने महत्वपूर्ण प्रश्नहरू अनेक हुन सक्तछन् ।

त्यस अलावा; उचित पाठक प्रतिकृया एवं सुझावको अभावमा कुनै पनि कदमद्वारा निर्दिष्ट लक्ष्य हासिल गर्न गाह्रो हुन्छ भन्ने कुरा इन्कार गर्नु जस्तो साँढे–प्रवृति अरू केही हुन सक्तैन । अझ भनौं भने – पत्रिका भनेको स्वच्छ अभिव्यक्ति पोख्ने सार्वजनिक मञ्च हुन् । अतः 'कोङ्पी' हरेक सुझावहरूको कदर मात्र होइन; अपेक्षा गर्दछ र यसको लागि दृढ सङ्कल्प–कृत रहेको पनि घोषणा गर्दछ ।

# रेड–इण्डयन : अस्तित्व खतरामा छ

## पाषाण–युगदेखि जीवन्त यी आदिमजातिलाई बचाउन आवश्यक

वाशिङ्गटन, न्यूयोर्क, क्यालिफोर्नियातिर केहि यस्ता मानिसहरू घुमिहिंड़ेको देख्न पाइन्छ; जो न त गोरा छन्, न त काला छन्, न हिन्दी-चीनी देखिन्छन्, न ल्याटिनी नै। उनीहरूको चेहरा पनि गजबको छ, रङ्ग सफा गोरो नभएर गहुँगोरो अनि धेरै जसोले केश चुच्चो पार्दछन् र पुरानो अथवा पारंपरिक तरीकाले काँधसम्म लामो राख्दछन्। यिनी अमेरिकाका मूलनिवासी हुन जसलाई 'अमेरिकी-भारतीय' पनि भनिन्छ र आदिवासी, रेड इडियन तथा मूलनिवासी पनि। उनीहरूको अतीतको बारेमा भनिन्छ कि पाषाण यूगदेखि त्यम क्षेत्रमा विचरण गर्दै आएका हुन र लगभग चारसय वर्ष पहिले गोराहरूसँग यिनीहरूको समागम भयो। यिनीहरू भारतीय हुनुको बारेमा यो तर्क दिइन्छ कि भारतीय सभ्यता निकै पुरानो छ, संभवत: त्यहाँबाट घुम्दै यहाँ आएर बसे होलान। तर उनीहरूको शारिरीक गठन, भाषा, परिवार, जीवनस्तर आदिबाट स्पष्ट हुन्छ कि भारतीयहरूसँग उनीहरूको निकटता छैन, त्यसै भन्ने गरियो र जुन अहिलेसम्म पनि भनिदैछ, यूरोपीय, अफ्रिकीभने जस्तै।

अमेरिकाका यी मूलनिवासीहरू आज बढि तीव्रताकासाथ अदृश्य हुँदैछन्, तर, के यसको अर्थ उनीहरूको उपयोगिता समाप्त भैसक्यो ? शायद छैन। हुन त **रेड इंडियनहरू सुरक्षित क्षेत्रहरूमा वस्दछन् तापनि अमेरिकी समाजमा उनीहरूको निश्चित भूमिका छ। आफ्नो अधिकार प्रति उनीहरू जागरूक छन्। सरकारसँग उनीहरूको लडाँइ निरन्तर जारी छ। लडाँईको कारण उनीहरूको भूमि सरकारले अधिग्रहण गर्नु हो।** विगत चार शताब्दीदेखि रेड इंडियनहरूले आफ्नो जीवनको लागि लड्दै आइरहेका छन्। अब यिनीहरू **एकजुट भएर लडे भने एकदिन सरकारले उनीहरूको समक्ष घुँडाटेक्नु पर्नेछ।** धेरै खालका वंश र विभिन्न स्वार्थको कारण सामान्य हित टुटफूट भएर रहेको छ। यो **टुटफूटको लाभ गोरा, काला तथा अन्य ती मानिसहरूले उठाइरहेका छन् जो आज अमेरिकी समाजमा घुलमिल भैसकेका छन्। तर, यी मूलनिवासीहरूलाई भने आज दोस्रो दर्जाको नागरिक भनिन्छ,** धेरै ठाउँमा त अछूत जस्तै छन्।

सन् १९७० को जनगणना अनुसार रेड-इण्डियनहरूको संख्या ७, ९२, ७३० थियो। अमेरिकाको पचास राज्यहरूमध्ये यी प्रमुख राज्यहरूमा यिनीहरू यस प्रकार बसेका छन्:- ओक्लाहामा ९८,४८७; आरिजोनामा ९५, ८१२; क्यालिफोर्नियामा ९१,०१८; न्यू मेक्सिकोमा ७२, २८८; उत्तर कारलिनामा ४४,४०६; वाशिङ्गटनमा ३३, ३८६; दक्षिण डाकोटामा ३३,३६५; न्यूयोर्कमा २८३५५; मोंटानामा २७,१३० र मिन्नेसोटामा २३,१२८। यी रेड-इण्डियनहरू ११५ आरक्षिक क्षेत्रहरूमा बस्दछन्। यी आरक्षित क्षेत्रहरूमा बस्नेहरूको संख्या ६,४९,००० छ। धेरै जसो मिसिसिपि नदीको पश्चिममा बस्दछन्। सबभन्दा धेरै आरक्षित क्षेत्र आरिजोनाको नावाहोमा पर्दछ। त्यसपछि उटाह र न्यूमेक्सिकोको स्थान छ। आरक्षित क्षेत्रको क्षेत्रफल २५,००० वर्गमील छ। सबभन्दा थोरै रेड-इण्डियनहरू न्यूमेक्सीकोको पाजोएक पेवलोस गाउँमा छन् –सीर्फ ३३ जना। उनीहरूमा अत्महत्याको दर एक लाखमा ३२ छ, जब कि सामान्य अमेरिकी दर १६ छ, जहाँ रेड-इण्डियन ४५ प्रतिशत वेरोजगार छन् त्यहीं आम जनसख्यामा वेरोजगारी ६ प्रतिशत मात्र छ। आम अमेरिकीहरूको ५० प्रतिशतको तुलनामा सन्१९७१मा सिर्फ१८ प्रतिशत रेड इण्डियनहरूले कलेजहरूमा प्रवेश लिए। यिनीहरू ४९३ वंशका छन् र सबै वंशले आफूलाई पुरानो र सर्वश्रेष्ठ ठान्दछन्। आपसी मतभेद र फुटको कारणले नै उनीहरूको गाउँको खनिज पदार्थहरू र अन्य श्रोतहरूको शोषण सम्पन्न अमेरिकी-खास गरेर यहूदीहरूले गर्दछन्। सन् १९७५को तथ्यांक अनुसार आम अमेरिकीहरूको प्रति व्यक्ति वार्षिक आय ५,८६९ डलर थियो भने त्यहीं समय रेड-इण्डियनहरूको १,५७३ डलर मात्र देखियो। सबै अमेरिकीहरूको औसत आयू ७०.९ वर्षको छ भने रेड-इण्डियनहरूको ६५.१ वर्ष मात्र छ।

रेड-इण्डियन नेताहरूको भनाई छ कि **आज हामी शोभाको चीज भइसक्यौं। हामीलाई विदेशीहरू समक्ष 'प्रदर्शित' गरिन्छ।** यस्तो किन? हाम्रोआफ्नो सँस्कृति छ, हाम्रो लोक सँगीतछ, हाम्रो लोकपरम्पराहरू छन्। तो प्रदर्शित गरिनु पर्दछ। उनीहरू चाहन्छन् कि आरक्षित क्षेत्रहरूमा वंश-स्वशासन होस। उनीहरू यी सम्झौता अनुसारको शासन चाहन्छन् जो सरकारसँग गरेका थिए र ती सन्धी [सम्झौता] ले नै उनीहरूलाई असाधारण मानिसको कोटीमा राखेका थिए। उनीहरूलाई अनौठो अधिकार र विशेषाधिकारहरू प्राप्त छ।

रेड-इण्डियनहरूको लागि आरक्षण प्रणाली र विबिन्न वंशहरूसँग सन्धी गर्ने चलन त्यसैबेला देखि चल्दै आएको हो जब अमेरिकामा ब्रिटेनको शासन थियो। यद्यपि ब्रिटेन सरकारले यो स्वीकार गर्दै थियो कि जुन क्षेत्रहरूमा रेड-इण्डियनहरू बस्दछन्; त्यहाँ उनीहरूको प्रभूसत्ता छ तथापि यी वंशहरूको राजनैतिक दर्जालाई स्वीकार गर्ने गरिन्थ्यो। केहि निश्चित सीमाभित्र यी वंशहरूको आफ्नो भूमिमा पूरा अधिकार थियो जहाँ उनीहरूलाई आफ्नो वशको नियम तथा परम्परा अनुसार शासन गर्ने स्वतन्त्रता दिइन्थ्यो। सन् १७७६ मा अमेरिकी स्वाधीनता पछि पनि रेड-इण्डियनहरूसँग भमि सम्बन्धि सन्धिहरू हुँदै आएका थिए, तर सन्१८७७ मा काँग्रेस (अमेरिकी संसद अ.) ले यस प्रथालाई समाप्त गरिदियो। त्यस बेलासम्म सयौं सन्धिहरूमा हस्ताक्षर भै सकेको थियो र त्यस्को अमोनुदन पनि भै सकेको थियो। यी सन्धिहरूलाई लिएर कानूनीहरूले प्रश्न उठाए पनि: सन्धिहरू त दुई प्रभूसत्ता सम्पन्न राष्ट्रहरूको बीचमा हुन्छ, जब कि रेड-इण्डियन त अमेरिकी व्यवस्थाको अंग हुन्। अमेरिकी विधिवेत्ताहरूको तर्क छ कि परम्परागत



कोइली १/ कातिक,०३७

भूमि प्राप्तीको लागि यस प्रकारका सन्धिहरू आवश्यक छन्, तर, यसको अर्थ यो होइन कि रेड-इण्डियनहरूलाई प्रभूसत्ता गम्पन्न राष्ट्र नै दर्जा प्राप्त छ।

भूमि सम्बन्धि सन्धिहरूलाई लिएर सरकार रेड-इण्डियन अथवा यी आदिवासीहरूको बीचमा निरन्तर मतभेद चल्दै आइरहेको छ। रेड-इण्डियनहरूको भनाई छ कि उनीहरूको आरक्षित क्षेत्रहरूमा आज तेल, ग्याँस, कोइला र यूरेनियम जस्ता चीजहरू धेरै मात्रामा प्राप्त हुन थालेको छ र त्यसैको लागि केन्द्रीय सरकारले उनीहरू- आपनो भूमिबाट बन्चित गर्दै।

– अनु० **टंक लोहरूङ**

[साभार: 'दिनमान'; पृष्ठ-१७–२३; अगस्त, १९८०, समाचार भूमि]

# कस्तो हरे मनपरी ?

**–भोजभक्त कडेल**
महेन्द्र-रत्न क्याम्पस

हे माता ! जननी नेपाल भूमि हे ! सन्सारकी सुन्दरी,
दियौ जन्भ सहेर दु:ख मनको, ऊँ वागको फूलसरी
हुर्किउँ सबै त्यो काख भरिलो, पारेर तिम्रो जहाँ,
छैनन् भेद र भाव जात दुई छन्, छोरा र छोरी यहाँ।

खेलुन खाई, बढी यो पुण्य–भूमिमा, मेरा सारा सन्तति,
हुन् एकै परिवार छैन अरू कोहि, तिम्रा थिए मन भरि।
कस्का सन्तति हुन यी ब्राम्हण अनि, क्षेत्री कउन सन्तति,
को हुन वैश्य अनि यी शूद्र कुन हुन, कस्तो हरे मनपरी ?

ब्राम्हण, क्षेत्री र वैश्य, शूद्र तँ भनी, कुन देवले भन्दियो ?
तँ सानु म ठूलो भनी मत दिने, हाय ? दूष्ट त्यो कुन थियो ?
लेखी ग्रन्थ नकामका अधर्मले, व्यथ प्रचाऱ्यो किन ?
द्यौता हुन्छ भनी कुन पुरूषले, देख्यो अरे कुन दिन ?



# राई समाजमा प्रचलित विवाह–विधिका चरणहरू

**– घल राई**

सामान्यत: युवा र युवती बीचको प्रणय–सूत्र-लाई मर्यादा तथा सामाजिक वैधता प्रदान गर्नु नै विवाह हो। सामाजिक प्रथा, चलन, विश्वास र मान्यताको आधारमा अपनाई आएको प्रक्रया अनुरूप सम्पन्न गर्ने ढाचा "विवाह विधि" हुन्। समयको गतिमा भाषा, संस्कृति, धर्म जस्ता कुराले र प्रदेशको आधारमा विभक्त विभिन्न मानव समुदायले यसलाई आ-आफ्नै धर्म, संकार तथा जातिगत् चलन अनुसार सम्पन्न गर्ने गराउने पर-म्पराको विकास गरेका छन्। आफ्नै परम्परा, चलन, रीत, विश्वास तथा इतिहासप्रति गर्व गर्ने राईहरू पनि अपवाद हुन नसक्नु स्वभाविकै हो। अत: उनीहरूले पनि आफ्नै प्रकारको प्रथा जगेर्ना गर्दै आएका छन्।

जातिगत् प्रथा तथा संस्कार अनुसार राईहरू आफ्ना नातागोता र परिचित इष्टमित्रहरू जम्मा गरी भोज खुवाउनु, हर्ष बढाई गर्नु, रमाइलो गर्नु र दाम्पत्य जीवन गाँस्न गइरहेका नव-दुलहा-दुलहीलाई आशिष दिनु र शुभ-कमना व्यक्त गर्नु सम्मको दायरा भित्र विवाहको अर्थ सीमित गर्दैनन्, बरू अनन्त-जीवन-चक्रको महत्व-पूर्ण सामाजिक शृङ्खलाको अभिन्न र भभिलेखमय इति-हाँसको सूत्रधार तथा अर्वजित र नैसर्गिक दायित्वको रूपमा ग्रहण गर्नु पर्ने सामाजिक दायित्वको बोध गर्दछन्।

अत: परम्परागत् प्रक्रया अपनाई सम्पन्न गर्ने जातिगत् यस चलनलाई उनीहरू पूख्यौंली सम्पत्ति ठान्दछन्। वास्तवमा, उनीहरूको जातिगत् वैवाहिक विधिको उल्लेखनीय विशेषता पनि यीनै हुन्।

राई परम्परामा पाइने विवाहका प्रकार सामान्यतया निम्न प्रकारका छन्, जस्तो:—

१) दोइत्मा ताइत्मा
१) सोइन्मा ताइत्मा
३) तोङमा तामा
४) साइत्मा ताइत्मा

परम्परागत यी चलनहरूमध्ये 'दोइत्मा ताइत्मा' - प्रथा सम्मान र गर्वका प्रतीक मानिन्छ। यस आधारमा 'सोइन्मा ताइत्मा' दोश्रा दर्जाको हो भन्न सकिन्छ भने 'साइत्मा ताइत्मा' प्रथा आजकल कसैले पनि रूचाएको देखिन्न। किनकि, यो जवरजस्ती प्रथा हो, यसमा केटाको इच्छा बाहेक कसैको स्वीकृति आवश्यक पर्दैन। तर, 'सोइन्मा ताइत्मा' प्रथामा भने केटा र केटी बीचको पूरा मन्जुरी र केटीको अविभावकमध्ये कसैको मन्जुर र कसैको बेमन्जुर भएको अवस्थामा खासगरी यो प्रथाको सहरा लिने गर्दछन्। सोउन्मा ताइत्माको अर्थ 'फकाई ल्याउनु' हो।

'तोङमा तामा' प्रथा 'प्रेम विवाह' हो; यसमा कतिपय अविंभावकहरू खुशी हुन्छन् भने कतिपय बेखुशी पनि हुन्छन्। तर अस्वीकार चाँहि गरिन्न। बरू नव-दुलहा-दुलहीहरूको भविष्य वारे उनीहरू नै स्वयं जिम्मे-वार हुन्छन् भनी चिन्ता गरिन्छ। किन्तु, नयाँ पीढिहरू यसप्रति नै बढी अभिमूख हुँदै गएका देखिन्छन।

किन्तु, चारै प्रथाको अन्तिम रूप प्रदान गर्ने विधिमा भने किसिम अनुसार औपचारीकताका केही चरणहरू कटौती भए तापनि आधारभूत विधिहरू भने कसैले वर्जित गर्न वा फरक पार्न सक्दैनन् । यतिसम्म कि जीवनकालमा वास्ता नगरिए तापनि मृत्युवाद ती विधिहरू पूरा गर्न सन्तानहरू बाध्य हुन्छन् । राई परम्पराको लागि यो एउटा महत्वपूर्ण विशेषता अवश्य हुन् ।

सामाजिक दृष्टिले सम्मानित र सर्वमान्य प्रथा "दोइत्मा ता'इत्मा" हो जो अघि नै भनियो । आजतक व्यवहारमा साला-खाला९५ प्रतिशतले यही प्रथा अपनाउने गर्दछन् । यस अन्तर्गत् निर्वाह गर्नुपर्ने विधिका चरणहरू सामान्यत: निम्न छन् ।

१) चुइत्मा दोइत्मा चरण,
२) चुकुवा पाक्मा चरण,
३) चेप्सी खात्मा चरण,
४) वात्तोङ खोक्मा चरण,
५) दाप्या हुत्लुङ खइत्मा चरण,
६) माङदा पाक्मा चरण,
७) छाछोङमा चरण

**[१]चुइत्मा दोइत्मा चरण:–** विवाहको क्षेत्रमा पाइलाचाल्दा प्रारम्भिक प्रयास स्वरूप गरिने "चुइत्मा दोइत्मा" प्रथम चरम हो । विधिका दृष्टिले यसको खास महत्व हुँदैन । तर, परम्परागत चलनका दृष्टिले भने अझ यो निकै महत्वपूर्ण अध्याय मान्दछन् । खासगरी सामा:-जिक नैतिकता र शिष्टताका कुराहरू यसमा पर्दछन् । सीर्फ यति हो कि विधिका दृष्टिले वाध्यकारी मानिन्न ।

राई समाजमा केटीको अविभावक तर्फबाट केटा खोज्ने चलन बिलकूलै पाइन्न । किनभने-केटीको अविभावक तर्फबाट केटा खोजी गर्नुको अर्थ केटीको महत्व घटाउनु हुन्छ भन्ने ठान्नु उनीहरूको जातिगत परम्परा हो । खोजी गरेमा सामाजिक प्रतिष्ठाका दृष्टिले हल्का हुने ठान्दछन् । त्यसैले राईहरू केटाको खोजी नगर्नुमा नै इज्जत सम्झने गर्दछन् । अपमान र बेइज्जत हुने कार्य-बाट सदा अलग रहने प्रयास गर्नु र स्वाभिमानीताप्रति सजग रहनु राईहरूको जातिगत विशेषता नै हो; अत: उनीहरू सँधै यसको रक्षा गर्ने प्रयास गर्दछन् ।

केटापक्षहरू पनि त्यस्तै नै हडबडमा अघि बढेर आफ्नो ईज्जत तथा प्रतिष्ठामा धब्बा लाग्न सक्ने काम गर्दैनन् । स्वाभिमानीताको रक्षाको खातिर संयम र विवेकशील भै अघि बढ्नु नै उचित सम्झन्छन् । अत: यस कामको लागि उनीहरूले अति होशियारपूर्वक कूटनैतिक दायित्व निर्वाह गर्नुपर्ने परम्पराको जगेर्ना गर्दै आएका छन् । यस अनुसार कदाचित् प्रस्ताव अस्वीकार भएमा पनि स्वाभि-मानीतामा आँच आउन सक्दैन ।

अत: विवाह योग्य भएका छोराको निमित्त उप-युक्त र मनले खाएको कुनै चल–कुटुम्बेरी केटी छ भन्ने पत्ता लाग्यो वा थाहा भएकै भए पनि सामाजिक दृष्टिले उपहासको पात्र बन्न नपरोस भन्ना खातिर सर्वप्रथम आ–आफ्ना दाक्मित्छाहरू मार्फत ठट्टिने क्रममा मात्र सामान्यत: प्रसङ्ग उठाउने गर्दछन् । अत: अप्रत्यक्ष रूप वाट मनोभाव बुझी सकारात्मक वा नकारात्मक के छ भन्ने कुरो पत्ता लगाउन सम्मको लागि प्रयोग गरिने यो यौटा चाटुकारीकला विधि मात्र हुन् । केटा वा उनका अविभावकहरू यस विधिमा प्रत्यक्ष्य रूपले संलग्न हुँदैनन्; आफ़न्त वा विश्वासका छोरीचेलीहरूले भूमिका खेल्छन् । यस चरणलाई राईहरू 'चुइत्मा दोइत्मा'[ठट्टाइलो मगनी] भन्दछन् ।

**[२]चुकुवा पाक्मा चरण:–**मगनी कार्यको दोश्रो चरण 'चुकुवा पाक्मा' हो । चुइत्मा दोइत्मामा सकारा–त्मक्ता देखापरे केटापक्षहरू औपचारीक तवरमा देखा पर्दछन् । यसरी औपचारीक रूपमा देखापर्नु वा प्रस्ताव लिएर जानुलाई बान्तावा भाषामा 'खासेन्सी खाइत्मा' पनि भन्दछन् । वास्तवमा मगनीको विधिवत् शुभारंभ गर्ने चरण यही नै हो ।

यो चरण शुरूगर्दा सर्वप्रथम "कोङपी" नियुक्त गर्दछन् । कोङपीको भूमिका केटाको अविभावक तर्फको प्रतिनिधित्व गर्नु हो । यस पदको लागि साधारणत: भान्जा भान्जी वा वंशको विशेष बुढ़चौली हुनुपर्ने परम्पराको अनुसरण गर्दछन् । विशेष प्रकारको पगरी गुठाइदिएर सर्वप्रथम नियुक्तिको वैधानिक रूप प्रदानगरी कोङपीलाई सम्मानित् गराउँछन् र विवाहको अन्तिम फार्छे नभएसम्म ऊ द्वारा नै सम्पूर्ण विधिवत कार्यहरू सम्पन्न गर्ने गर्दछन् । यसरी प्रतिनिधित्व गरे वापत विवाहको अन्तिम चरणमा खासगरी सुँगुर, राँगाको टाउको र 'वाराम्भ' आदिले उनको पारख गर्दछन् ।

वैवाहिक सम्बन्ध जोडने सिलसिलामा राईहरूले अति नै मानसम्मानको ख्यालगर्ने चलन हुर्काएका छन् । अत: मगनीको अठोट गर्न साथै 'कोङपी' नियुक्त गर्छन् र काम फछर्यौट नभएसम्म निभाउन पर्ने सम्पूर्ण काम ऊ द्वारा नै गर्दछन् अर्थात् केटा र केटी पक्षका अविभावकहरू व्यवहारका दृष्टिले सरकार प्रमुखका रूपमा सम्मान गरागर गर्दछन् र उनीहरू बीच हुने सञ्चारको हरेक काम कोङपी कोङपी मार्फत गर्दछन् । आफ्नो घरैमा पनि स्वयं अघि सर्दैनन् र कोङपीलाई नै दूतको रूपमा प्रस्तुत गर्दछन् । कोङपीको साथमा सहायक अरू भए त्यस अवस्थामा कोङपीहरू टोली प्रमुख हुन्छन् र आमने सामने नै त्यस सम्बन्धी घरायसी छलफल गर्नु परेपनि औपचारीक रूपमा प्रस्तुत गर्ने र त्यसको प्रतिक्रिया प्राप्त गर्ने काम कोङपी सिवाय अरूले गर्दैनन् । सम्धी सम्धी बीचको छलफलमा विशेषगरी यो रीत निभाउँछन् ।

किन्तु, कोङपीको साथमा एकजना सहायक पनि नियुक्त गर्ने चलन पनि छ; जसलाई राई–बान्तावा भाषामा "सालुम्सङ्" भन्ने गर्दछन् ।

कन्यार्थको थाल्नीमा जाँदा परम्परानुसार घर-भित्रको विधि पूरा गरेर कोङपी, सालुम्सङ्, सम्बन्धित केटा र सामाक्छा [सामा–सर्दम् बोक्ने] गरी सामान्यत: जोडी पारेर ४ जना निस्कने गर्दछन् । सामाको रूपमा अनिवार्य बोक्न पर्ने निम्न नामका रक्सीका चिण्डोहरू दुइथान हुन्छन् ।

(क) लाङवा वाबुब् वा खासेन्मा वाबुब्
(ख) सायाचोङ्मा बा वाबुब्

हिड्दा बाटो डोबाटोहरूमा आफूले मान्नुपर्ने कुनै भद्र भलाद्मी वा नाता कुटुम्बहरूसँग भेट भएमा 'यस्तो शुभ–कार्यमा जान लागेका हौं' भन्ने कुरा विधिवत् जानकारी गराउनु पर्दछ र सो को निमित्त औपचारीकता निभाउँदा खर्च गर्ने हिसावले बोकिने 'लाङवा वाबुब्' हुन् । तर ठीक उल्टो खासेन्मा वाबुब् चाहिं बीचमा खर्च गर्न सकिन्न । किनकि, केटीको आमा बाबु वा अविभावक जो छ उनको मान–सम्मानको लागि लगिने वाबुब् हुन् ।

एवं रीत अनुसार 'साकासेन्वा' टोलीहरू गन्तव्य स्थानमा पुग्दछन् ।

त्यस्तै केटीको जन्म–घरमा टोलका लब्धप्रतिष्ठित बुढचौलीहरू निम्ताइएका हुन्छन् । औपचारीक रूपमा प्रसंग उठाउनु भन्दा अघि सामान्यत: भलाकुशलीकै कुराहरू गर्दछन् ।

जब औपचारीकताको थाल्नीतिर उन्मुख हुन्छन् बुढचौली तथा भद्र–भलादमीहरू गोलाकारमा आशन

ग्रहण गर्दछन् । केटीको आमा बाबु वा अविभावकहरू जो हुन्छन् उनीहरूले पनि यसम भाग लिन्छन्; तर उनीहरू कुटुम्बका प्रतिनिधिहरूसंग सामान्यतः सिधै कुरा गर्दैनन्, अर्थात् त्यस छलफलमा कुराकानीहरू जति गरिन्छन् त्यसलाई औपचारीक रूपमा कुटुम्ब वा उनका प्रतिनिधिहरूलाई सुनाउने काम मूल बुढचौलीले गर्दछन् । केटी चाहिं कामको सिलसिलामा यताउता गेरेर चियाउने गर्दछिन्, छलफलमा सहभागी बन्दिनन् । तर यसको माने केटीको स्वीकृतिको आवश्यकै ठानिन्न भन्ने होइन, साधारणतः आमाको माध्यम उनको मन्जुरी लिइनै सकिएको हुन्छ । यसकारण केटासँग देखादेख भैनसकेको भए एकार्कको हाउभाउ बुझ्नेसम्म प्रयत्न गर्दछन् ।

विधिपूर्वक आशन ग्रहण गरिसकेपछि कोङपीले 'सायाचोङमा' वा 'खासेन्मा वाबुव्' बीचमा राखेर प्रसंग उठाउने गर्दछ; थाल्नीमा प्रायः कुनै पनि यसो भन्ने गर्दछन् :–

"आम्नुओ खिम्–युङदा नानुम्मा-बुङ बारा ! ओह्यात्नी मोयात्नी आइन्काओ दात्नी नाम्नुआ ता; मो नान्नुमा–बुङ नाम्सा भमरा आन्नुओ खिम्युङ–बुग्लुङदा तान्लान्का ओ नै ! ओदा खादा खात्नी फिसुम्काउनुछे भमरा मक् मात्दङ, दोङदिवा छा–मात्दङ; ठिलुम् खाइँन्सुम् तोलुम् खाइँन्सुम् नालो थाम्पुक्दा माखात् याम्-खाइत् नीकि सोम्आ तुक्तानुम्, रात्तानुम्, कुक्तानुम् आम्नुओङा–ओ नै अर्थात् "हजुरहरूको घर दलानमा सुगन्धयुक्त फूलफूलेछ' डाँडावारी डाँडापारी बासना चल्यो, हाम्रो घरतिर पनि पुग्यो र त्यही सुधन्ध पैल्हाउँदै पैल्हाउँदै भमरा तपाहहरूको घर--आगनमा आइपुगेको छ, यसमा कहीं भूल--गल्ती हुन गएको भए 'भमराको आँखा छैन, दोङदिवाको सन्तान छैन, हकारी पठायो, धकेली पठायो मऱ्यो भने यसको इतिहासै हराउँछ' भनेर दयाहोस क्षमा रहोस" यति भनेर कोङपीले कूटनैतिक चाटुकारीकलाका साथ चिण्डो उठाई मुख्य बुढचौली अर्थात् हुनेवाला फेङमा कोङपीको अघिल्तिर सारे जस्तो गरी प्रतिक्रियाको प्रतीक्षा गर्छन्; एवं तरीकाले विषय अगाडि बढ़ाउँछन् ।

यो अध्यायमा मूलतः निम्न विषयमा छलफल गर्दछन

क) पिता–पूर्खाहरूको इतिहास केलाउँछन्,
ख) मावला तथा नातागोताहरू केलाउँछन्,
ग) साख--सन्तानका हाँगा--विगा र उनीहरू बसेका ठाउँहरू बारे स्पष्ट गर्दछन्,
घ) कुटुम्ब चलाउन कहीं वाधा अडचनहरू छन् कि सो बारे प्रष्ट गर्छन्,
ङ) बाधा अडचन नभएको स्पष्ट भएमा र कुरा मिलेमा प्रारंभिक स्वीकृति स्वरूप 'साया चोङमा वाबुब्' विधिवत् ग्रहण गर्दछन्,
च) चेप्मा तीथि तोक्छन् ।

**[३] चेप्मा चरणः–** मगनीको तेस्रो चरणलाई चेप्मा र त्यस कार्यमा जानुलाई "चेप्सी खाइत्मा" भन्दछन् । यो चरणमा पुग्दा केटीको अविभावक तर्फबाट पनि औपचारीक तवरमा नै कोङपीको नियुक्त गरेका हुन्छन् जसलाई "फेङमा कोङपी" भन्दछन् ।

प्रतिनिधित्व गर्नु पर्ने कामको लागि दुवै कोङपीहरूको पोजिशन समान हुन्छ र सोही अनुसार व्यवहार गर्दछन् ।

संस्कारगत् विधिका दृष्टिले यो अध्यायलाई राईहरू अझ महत्वपूर्ण सम्झने गर्दछन् । किनकि यस अध्यायमा पुग्दा मूलघरसम्मको मात्र सीमित दृष्टिकोण नराखी माइती मावलीहरू पनि हुन्छन् र त्यसको लागि पनि सम्मान गर्न रीतहरू पुऱ्याउनु पर्छ भन्ने संझन्छन् र सो अनुसार 'लाङवा वाबुब्,' 'सायाचोङमा वाबुब्, मात्र होइन, कोङपी वाबुब्, माइती–मावली पहिल्याउने वाबुब् आदि पनि लग्न र ल्याउन आवश्यक ठान्छन् । माइती, ङाप्मित्‌ची कत्ति छन् ? मावलाहरू को कहाँका हुन् र उनीहरूको मर्यादा राख्न के कस्ता रीतहरू निभाउने परम्पराहरू छन् ? खोला--टोला अनुसार चलिआएका चलनहरू के कस्ता छन् ? सो बारे छलफल गरी सम्पूर्ण कुराहरू 'फेङमा कोङपी' मार्फत् जानकारी लिनु पर्दछ भन्ने उद्देश्यले गरिने भेटको क्रम नै वास्तवमा यस चरणको विशेषता पनि हुन् । अतः यस पटकको भेटवार्ताले निम्न कुराहरूको लागि महत्व राख्दछ ।

क) विधिवत् नियुक्त कोङपी स्तरबाट छलफल गर्नु,
ख) छलफलमा ब्यापक दृष्टिकोण अपनाउनु,
ग) वात्तोङ खोक्मा विधि तथा रीतहरू बारे स्पष्ट गर्नु,
घ) वात्तोङ खोक्मा तीथि निर्धारण गर्नु ।

**[४] वात्तोङ खोक्मा चरणः–**कन्यार्थको क्रममा राईहरू वात्तोङ खोक्मा चरण अर्को महत्वपूर्ण अध्याय सम्झने गर्दछन् । वास्तवमा, मगनीको चरमोत्कर्ष भाग पनि यही नै हो । किनभने-- यो अध्याय शुरू भएपछि अघिल्ला अध्यायसम्मका क्रियाकलापहरू सामान्यत फिक्कै भएर जान्छन् । कुनै पनि प्रकारको विवाहमा वात्तोङ खोक्मा गर्नै पर्दछ । परम्परा अनुसार यो अध्याय पूरा भएपछि केटीको आधा "रीत" छिनिसकेको मान्छन् र कथंकदाचित् वात्तोङ खोक्मावाद सम्बन्ध भंग भएमा कुटुम्ब पक्षले क्षतिपूर्तिको पनि दावा गर्न सक्तछन् ।

अर्कोतिर, चेप्मा रीतसम्म पुग्दा केटीको जन्मघर वा हुर्काउने, विहादान गर्न पाउने खूद अविभावक घरसम्म मात्र कुटुम्बले दृष्टिराखे पुग्दथ्यो भने यस अध्यायको क्षेत्र त्यति मात्र ठान्दैनन् । चेप्मा चरण सम्ममा नै ढिवात्तोङ, वात्तोङ, ङाप्मित्, दाक्मितहरू यी यी हुन् भन्ने सबै प्रष्ट पारिने हुनाले यस पटकको रीत गर्दा साख माइतीहरू जति घरमा फैलिएर बसेका हुन्छन्, त्यति नै घरको लागि औपचारीकता पनि निभाउन वात्तोङ खोक्मा सामा लग्दछन्। किन्तु, दाजुभाइहरू जत्तिसुकै चुलामा फैलिएर बसेको भए तापनि १३ थान भन्दा बढि सामाको जरूरत ठान्दैनन् र घरघरै पनि घुम्दैनन् । यस अध्यायमा पुगेपछि केटीको विहादान गरिदिने मूलघरलाई गाजीघर र विवाह कार्यको खर्चसँग सम्बन्धित घरहरूलाई "ढिवात्तोङ" र अरू दाजु-भाइहरूलाई "वात्तोङ" भन्ने गर्दछन् । रीतभातको सबै कार्य गाजीघरमै गर्छन् ।

यो अध्याय शुरू भएपछि एकापसमा टा--टाढाका कुटुम्बेरी जस्तो व्यवहार गर्न उचित ठान्दैनन् बरू चुलाका दृष्टिले मात्र विभक्त भएको र सांसारीक क्रम अगाडि बढाउन दायित्व भएका एकै परिवारका सदस्य संझन थाल्दछन् अनि सोही अनुरूप व्यवहारहरू सुल्झाउनेतिर लाग्दछन् ।

कोङपीहरूको छलफलमा दिवात्तोङहरू पनि औपचारीक रूपमा सहभागि बन्छन् र त्यस छलफलमा व्यवहारीक तथा खस्रा--मीठा-मसिना कुराहरूप्रति विशेष ध्यानदिने गर्दछन् ।

शुरूका चरणहरूमा जस्तो एकले अर्कोलाई अडको थाप्ने वा मपाइँपना झल्कने खालका कुराहरू अव विलकूलै ठाउँ दिदैनन् र त्यसको ठाउँमा ठट्टा मजाक गर्दै बढो सौहर्दपूर्ण वातावरणमा रीतहरू गर्दछन् । विहा कुन स्तरको अथवा कस्तो खाले र कहिले गर्ने ? जनता कत्ति हुनुपर्ने ? दोहरी बाजा लगाउने कि ? इत्यादि वारे

निधो गर्दछन् । किन्तु, यसमा निर्णायक भूमिका चाँहि सामान्यतः केटीको आमा बाबु वा अविभावककै हुनु राम्रो हो भन्ने परम्पराको जगेर्ना गर्दै आएका छन् ।

यो सबलाई थाहा भएको कुरा हो कि अधिक राईहरू गाउँमा नै बस्दछन् र जतिसुकै आर्थिक स्तर गिरेकै भए तापनि एउटा सानो घर हुनु राईहरूको जातिगत सांस्कृतिक विशेषता हुन् । किनकि, परम्परा अनुसार राईहरू पितृगत् माङ पूज्छन् र त्यसको निमित हरेक माङपालाई माङमुखाखिम् जरूरत पर्दछ । यही कारण, माङमुखाखिम विहीन राईहरू हुँदैनन् । अतः राई समाजमा शहर बजारमा जस्तो विवाहको लागि घर किरायमा लिने वा पार्टी–पौवा, चौतारा, मन्दीरको सहारा लिने चलन् देखिएको छैन । कोही यसका अपवाद हुन पुगेका छन् भने त्यो अर्कै हो । किनकि, ग्रामीण बालाहरू हिंडदा जसरी कुनै बाटो किनारमा पाइने कुनै फूल चट्ट टिपेर शिरमा शिऊरन्छन्, त्यसरी नै खाश निर्यातविना रहरबश वा परिस्थितिवश मात्र त्यसो गरेका हुन सक्तछन्, संस्कारगत होइन । मूल कुरो के हो भने राईहरू भोजखुवाउनु, हर्ष बढाई गर्नुसम्म विवाहको अर्थ सीमित गर्दैनन्, माङमीय दृष्टिबाट हुनुपर्ने रीतहरू सम्पन्न गरिन पर्ने दायित्व प्रति बढि सजग हुन्छन्; अरू यसो भनौं कि भोज-भतेर वा हर्ष बढाइका कुराहरू दोस्रो दर्जामा आउने कुरा ठान्दछन्।

अर्को कुरा हरेक शुभ--अशुभ कार्यमा राईहरू "बोप्खावा" प्रयोग गर्दछन् । उनीहरूको यो परम्परागत मान्यता हो । कुनै राईले जीवनकालमा यसको सेवन नगरे तापनि जन्मदा र मर्दा अर्थात् शुरू र अन्तमा बोप्खावाले नै चोखिने गर्दछन् ।

उनीहरूको निम्ति 'बोप्खावा' पवित्र कुलामृत हुन् । वास्तवमा कन्यार्थको प्रत्येक विधिहरू गर्दा जाँडरक्सीको प्राधान्यता रहने कारण पनि यही नै हो । यसै अनुसार माङमुखा खिम्दा [कुल पूजने घरमा] वात्तोङ--खोक्मा चरण पूरा गर्दछन् ।



## [५] दाइप्या हुत्लुङ खइत्मा चरणः–

वात्तोङ खोक्मावाद साधारणतः बिहाको अन्तिम् रूप सम्पन्न गर्ने चरण आउँछ; लाई बान्तावा भाषामा "दाप्या हुइत्लुङ खइत्मा" भन्दछन् । विधिका दृष्टिले कन्यार्थको लागि गरिने यो अन्तिम चरण हो ।

तर कहिले कहीं परिस्थितिवश समय लम्बाउनु पर्ने स्थिति पनि आइपर्न सक्तछ, त्यस्तो अवस्थामा आवश्यक्तानुसार २--३ वर्ष विहा थाँत्ती पनि राख्नुपर्ने हुन्छ । तर, त्यसरी थाँत्ती राख्दा पनि सम्बन्ध अवछुन्न कायमगर्दै रहन पर्छ भन्ने दायित्व कुटुम्ब पक्षले निभाउँदै गर्ने गर्दछन् । त्यसको लागि गरिने उप--विधिहरू निम्न छन् ।

**(क) बुङवाची मबाराः–** प्रत्येक वैशाखमा "बसन्त ऋतु लाग्यो, वर्षातले छोयो, अब फुर्सद हुँदैन, किनकि, बार--बिरूवाहरू लगाउने समय आयो; त्यसकारण हामी बीच चलिरहेको कन्यार्थको कुरा हिउँदतिर सारौं है !" भन्ने विधि गर्छन् । विहा सम्बन्धि रीतहरू नछिनिन्जेलसम्म यो वर्षेनी गर्ने गर्दछन् ।

**[ख] दोङदावाः–** जब मंसिरतिर किसानहरूले बाली-नाली उठाउन लागेका हुन्छन्, फूको फैल्हो हुँदै गएको हुन्छ र कामबाट फुर्सद पाउँदै गएका हुन्छन्; त्यस अवस्थामा "हिउँद लाग्यो, फूको फैल्हो हुन लाग्यो, त्यसकारण, हामीले थाँत्ती राखेको काम फोर जगाउँ है, नत्र विर्सन सक्छ" भन्ने रीत सम्पन्न गर्दछन् । यस रीतलाई बान्तावा भाषामा "दोङदावा" वा "दोङदावा नियङमा" भन्दछन् ।



'बुङवाची मबारा' र 'दोङदावा' रीत गर्दा पनि कोङपी र हुनेवाला बेहुना गाजीधर जान्छन् । उनीहरूले परम्परा अनुसार चाँहिने रीत लगेका हुन्छन् र ती रीतहरू फेङमा कोङपीको स मु राखेर विन्ति भाउ साथ व्यहोरा प्रस्तुत गर्दछन् ।

यो परम्परा तोड़ेमा गाजीघरको अपहेलना गरेको ठानिने हुनाले छोरी नदिन पनि सक्छन् र अन्यत्रै पजनी गरेमा त्यस सम्बन्धमा कुरा उठाउन पाइन्न भन्ने चलन छ । किनकि, क्रम टुटेमा भैसकेका रीतहरू भंग भएको मानिन्छ भन्ने परम्परागत धारणाबाट राईहरू फूटकन सकेका छैनन् ।

तर, रीतभातको क्रम चल्दाचल्दै कसैले आफ्नी छोरी चेली अन्यत्र पजनी गरेमा या सम्बन्ध विच्छेद भएमा त्यस्तो गर्नेलाई सामाजिक दण्ड दिन्छन् र शुरूदेखि वात्तोङ खोक्मासम्ममा लागेको सम्पूर्ण खर्च व्यहोराउँछन् र नैतिक दृष्टिले पनि हीन ठहराउँछन् ।

अर्को कुरा विहादानको सम्पूर्ण कार्य पूरा गरिसकेर पनि परम्परा अनुसार राईहरू यौटा बिशेषाधिकार सुरक्षित राख्तछन् र सो अनुसार केटाले वारम्बार दुःख दियो अथवा अपहेलना गऱ्यो र घरमा बस्न नसक्ने स्थिति पऱ्यो भने रीतभात गर्दा लागेको खर्च व्यहोरेर छोरीलाई मुक्त गर्न सक्तछन्, जसलाई 'उखुण्डी' गर्नु भन्दछन् । उखुण्डी गरिएका छोरी--चेलीहरू कन्या सरह पुनर्विवाहको लागि योग्य हुन्छन् ।

कन्यादानको अन्तिम चरणको कार्य गर्नुलाई "दाप्या हुत्लुङ खइत्मा" भन्दछन् । माइत घरको



चुल-कुलबाट विधिपूर्वक निकाली कुटुम्बको जिम्मा लगाई पठाउनु यसको अर्थ हो । दाप्या--हुत्लुङ खइत्मा गर्दा साधारणतः दिवात्तोङ, वात्तोङ भाइहरू, छुछावा, याङपेन्वा, ङाप्मित्, दाक्मित्हरू सबै भेला हुन्छन् । छुछावा याङपेन्वाले बेहुली र बेलुलीको आमा--बाबुको हातबाट दान--दक्षिणा र टीका ग्रहण गर्छन् । छआ [मामा]ले बेहुलालाई बोकी वा थमाई निधारित स्थानसम्म पुऱ्याउने चलन छ । अरू बाँकीले साइनो अनुसारको रीत लिन्छन्, दिन्छन्; नव-- दम्पतिको भावी जीवन सुखमय वितोस भनी कामना गर्छन् र आफूलाई त्यस शुभकार्यको साक्षी सम्झन्छन् । विवाहको सामान्य रूप यति नै हो ।

आ-आफ्नो गक्ष्यानुसारको भोज भतेरको आयोजना गर्नु स्वभाविक हो । तर, जस्तोसुकै खर्चिलो भए पनि केटीको आमा बाबु त्यस खर्चबाट मुक्त हुन्छन् । यो खर्च परम्परागत हुर्कको सस्कारसंग सम्बन्धित ढिवात्तोङ् भाइहरूले नै ब्यहोर्छन् । कुटुम्ब पक्षबाट जनता आउने बाहेकका खर्चहरू दाक्मितहरूले ल्याउने सामान नै प्रशस्त हुन्छन् । दान दक्षिणा वा दाइजोको कुरा राई समाजमा त्यति ध्यान-दिने चलन छैन अर्थात त्यसतर्फ राईहरू त्यति वास्ता गर्दैनन् । सरल तरीका अपनाउने चलन उनीहरू जातिसंस्कार मान्दछन् ।

तर, दाप्याहुत्लुङ खइत्मा तर्फको कुरोभने इच्छाको विषय होइन 'माङलुङ' भन्दछन् । माङलुङको अर्थ 'कुलदण्ड' हो । परम्परा अनुसार हाङलुङ [राजदण्ड] मिल्हा हुनसक्छ, तर, माङलुङ मिल्हा हुन्न भनिन्छ । त्यसकारण सम्बन्धित व्यक्तिको मृत्यु भएमा पनि माङलुङ असुल गर्छन् वा बुझाउँछन् । माइती पक्षले असुल गर्ने कुरा भन्दा पनि कुटुम्ब पक्षको बुझाउने दायित्व बाध्यारी हुने ठान्दछन् । जायजन्म भएका सन्तानहरू माङलुङ चुक्ता नभएसम्म

कुलमा भित्रिदैनन् अर्थात आमालाई फाछ्रेंगरी कुलमा भित्राएपछि मात्र सन्तानहरू माङमीय दृष्टिले वैध ठहरिने हुन्छ भने अर्कोतिर क्रमागत आएका रीतहरू टुटाई बीचबाट क्रम शुरूगरी परम्पराको अनुसरण गर्न सक्तैनन् । त्यसकारण, बीचमा कसैद्वारा प्रतिपादित सिद्वान्त वा सामाजिक मान्यताको आधारमा गरिने चलन होइन, आदिकालबाट माङमीय निर्देशानुसार चलिआएको चलनको रूपमा स्वीकार्दै आएका छन् । अतः राईहरू उपरोक्त कुराको विपरीत हिंड़ेमा सन्तानहरू लकवा, पेसोला वा अपाङ्ग हुँदै गई मासिन्छन् भन्ने धारणाको दरो पक्षमा स्वष्ट.देखिन्छन् ।

वास्तवमा, खोलातोलामा विभाजित राईहरूमा प्रचलित कतिपय विधिगत रीतका कुराहरू फरक फरक हुँदै गएको पनि अनुभव नभएको होइन । किन्तु, आधारभूत माङलुङका दृष्टिले फरक देखिन्न । प्रत्येक राईहरू 'माङ' पुज्छन् र हरेक महत्वपूर्ण कार्यहरूमा 'माङ खइतमा' गर्छन् । मा-ताइतमा [दुलही भित्र्याउने] कार्यमा त उपर्युक्त कारणहरूले गर्दा पनि माङमी नगर्ने प्रश्नै उठदैन ।

'रीत खाने' र 'रीत नखाने' दृष्टिले 'छा-गोइन्मा' [छोरी-चेलीको पजनी] गर्दा मूलतः २ प्रथा अपनाउने गर्दछन्, जस्तो:—

१] रीत-खाने प्रथा अन्तर्गत ढोग भेट गर्दा राखेको पैसा ढोग पाउनेहरूले नै लिन्छन्, फिर्ता गर्दैनन् ।

२] रीत-नखाने अन्तर्गत ढोग गर्दा राखेको पैसा ढोग-गर्नेहरूले नै फिर्ता लिन्छन्, ढोग पाउनेलाई छाडन पर्दैन । तर, माङलुङ स्वरूप गाजीघरमा लगिने खावा-बुलु भने फिर्ता हुँदैन ।

मृत्युवाद पनि विधिवत फाछ्रेंगरी लग्दा आवश्यक हुने चीजहरू निम्न हुन्, जसको समुहलाई बान्ताग भाषामा ''माङसामा'' भन्दछन् ।

क[ खावा [आठहात कपडा]

ख] बुलू [एकथान डबका]

ग] साइभाक् [एकजोर सुँगुर[

घ] वाराप्भ [खाचा घ्याम्प]

ङ[ छोंवालुङ [एकरूपैया पचासपैसा]

च] माङलुङ [एकरूपैया]

छ) सेवा-याङ [पचासपैसा]

ज) दाप्या हुत्लुङ-हाङमालुङ [नगद एकरूपैया र एक चिण्डो रक्सी जसलाई धितोधारण पनि भन्दछन् ।]

उपर्युक्त बमोजिमको माङसामा लगी फछर्याई कुलमा सामेल गराउनु कुटुम्ब पक्षको दायित्व हो । जायजन्म भै मरेको भए सन्तानहरूले यी सब पूरा गर्छन् । फाछ्रें नगरेमा सन्तानहरू निम्न कुराले पिरिइन्छन् भन्ने परम्परागत धारणाबाट राईहरू मुक्त हुन सकेका देखिनन् ।

क) सन्तानहरूले विधिवत् विहाकार्य गर्न सक्दैनन् ।

ख) मृतात्माहरूले पार नपाउने हुनाले क्षय भएर पिरोली रहन्छन् भन्ने धारणामा विश्वास गर्दछन् ।

ग) सन्तानहरू अवैध सन्तान ठहरिन्छन् ।

घ) साखा सन्तानहरू मासिइँदै जान्छन् ।

ङ) राईहरू ३ पुस्तासम्मका मृतात्माहरू थुमसङ दिवामा पुज्दछन् र त्यसपछि क्रमैसँग " साम्पुक दिवा" मा समावेश गर्दै लग्छन् । यी पूर्ख्यौली आत्माहरूलाई सामुहिक तवरबाट प्रत्येक साल ऊभौली र ऊधौली भनेर २ पटक पुज्छन् वा खुवाउँदछन् । उपरोक्तानुसार कुलमा नचढाइएकाहरू परम्परागत विश्वास अनुसार साम्पुक दिवामा समावेश हुँदैनन् ।

**(६) माङदा पाक्मा चरण:**—केटीलाई माइती घरबाट फाछ्रें गरी ल्याउने काम दाप्या हुतलुङ खइतमा चरणसम्ममा पूरा गर्छन । तर यत्तिकै विवाहको काम पूरा भएको भने मानिन्न । छोरी चेली पजनी गर्दा माइती पक्षबाट के कस्तो पितृगत विधिहरू सम्पन्न गर्छन र त्यसमा कुटुम्ब पक्षको के कस्तो भूमिमा हुन्छ, दुबै पक्षको दायित्व के के हुन् भन्ने मात्र उक्त चरणसम्ममा सम्पन्न गर्छन । अर्काको घरबाट ल्याएकोलाई बिधिवत भित्राउनु अर्थात घरको सदस्य बनाउनु अरु महत्वपूर्ण कुरा हुन् । माथि नै भनियो कि बिधिवत नभित्राए सम्म जायजन्म भए तापनि त्यस्ता सन्तानहरू पितृवत सदस्य हुन सक्दैनन् । त्यस्तो सन्तानहरू जबसम्म बिधिवत आफ्नो चुलकुलमा प्रवेश गराइदैनन्, तबसम्म उनीहरू पैत्रिक संस्कारका हकदार हुनबाट वंचित हुन्छन् । अतः दाप्या हुत्लुङखईतमा चरण अर्को महत्वपूर्ण दायित्व हुन् ।

हुन त चेप्मा चरणबाद नै केटीलाई घरमा लग्दछन् र त्यस अवस्थामा "खिम्कोङदा बाक्मा" अर्थात "द्वार प्रवेश" गराउँदा पनि सामान्य विधिहरू गरी भोज भतेर खान्छन । तर त्यस अवस्थासम्म माइती घरबाट फाछ्रेंगरी ल्याइसकेको नहुने हुँनाले घरमा भित्राउनुको अर्थ "साँघर" नाघी पस्नसक्ने गराउनुसम्म हो । कुलमा प्रवेश गराउने काम हुँदैन ।

अतः दाप्या हुत्लुङखइतमावाद बाँकीरहने मूल कार्य "माङदापाक्मा" चरण हो । सामान्यतः सोसुङ कुसुम्ने [जनता] गई केटी ल्याएकै दिन यो काम सम्पन्न गर्दछन् । तर; 'दोइतमा ताइतमा' बाहेक अन्य प्रकार अनुसार ल्याएको अवस्थामा भने त्यसो नगरी बर्षौंबाद पनि यो गर्दछन । किन्तु; मूल कुरो के हो भने "माङदा पाक्मा चरण" सम्पन्न नगरेसम्म प्रणय सूत्रमा आबद्ध भएका जोडिहरूको वैवाहिक सम्बन्धले औपचारीक तवरबाट मार्यादित भए तापनि पितृगत दृष्टिबाट मान्यता पाएको हुँदैन र सो पूर्ण नगरेसम्म न त कुलका सदस्य नै हुन सक्तछन् । त्यसकारण राई परम्परा अनुसार वैवाहिक सम्बन्ध जोड्दा माङदा पाक्मा चरणले नै विशेष महत्वपूर्ण भूमिका अदा गरेको हुन्छछ ।

**[७] छाछोंमा चरण:**— विवाहको अन्तिम चरण छाछोंमा अध्याय हो । परम्परा अनुसार यसले पनि अर्को महत्वपूर्ण धारणा सकारेको छ ।

वास्तवमा पितृगत विधिका दृष्टिले माङदा पाक्मा चरण सम्पन्न भएपछि विवाहका विधिहरू पूर्ण भएको नै मानिन्छ । त्यसकारण, यो चरण शिष्टतावश गरिने औपचारिकता मात्र हुन् । किन्तु त्यसो भनेर महत्वहीन र अनावश्यक भने भन्न सकिदैन । सीर्फ यति हो कि यो वाध्यताको कुरो होइन । परम्परागत शैलीको अभिन्न अङ्ग बनिसकेको यस महत्वपूर्ण पक्षलाई कोही तोड्न चाँहदैनन् त्यसैले छाछोंमा चरण पनि गर्ने गरिआएकै छन् ।

यस अनुसार केटीलाई चुल–कुलमा प्रवेश गराएको हप्तादिन भित्रमा आवश्यक कोशेली लिएर दुलहा–दुलही छादिवाराङ जान्छन । आमा–बाबुले तयार पारिदिएको सामा सर्दमको अनुपातमा काखुन्छाहरू हुन्छन् । तर कोङपीहरू हुँदैनन् र यस पटक माइत जाँदा केटी माइत घरका कुलका सदस्य हुँदिनन् । सीर्फ पाहुनाको रूपमा मात्र स्थान पाउँछिन् ।

बुढचौलीहरूका अनुसार यो चरण अरु महत्वपूर्ण हो । किनभने, मानिस जाति मानिसै हुन्, जङ्गली जनावर वा पशु होइनन् । त्यसकारण, मानिसर बीचको ब्यवहार मानिसकै जस्तो हुनुपर्दछ न कि असभ्य पशुको जस्तो । अतः कुनै पनि ब्यवहार मानव ब्यवहार जस्तो मात्र होइन सभ्य मानिसैले गरेको ब्यवहार जस्तो पार्नु पनि मानव दायित्वकै कुरा हुन् । दश महिना गर्भ बोको

दशधारा दूध चुसाई हुर्काउने आमाको हृदय बाबुको स्नेहमा आघात पुऱ्याउन हुँदैन; मातृत्व हृदय रून्छ कठोरतम पितृत्व हृदयको बाँध पनि भत्कन सक्छ; त्यस-कारण, दुईचार दिन घुम्न मनोरन्जन गर्न मात्र पराइघर गएको हो, परेवाको जोडिझैं जीवनभर जोडी लिएर भूर्रउडी आउँछिन जान्छिन, विसिएको दिलमा न्यानो पार्दै गर्छिन; पखेटा लागेको चंचले चरीन हुन्; यहाँ सधैं बस्दिनन् भन्ने शान्त्वनाजन्य धारणाको आँकुरा लाग्ने मौकादिन कुटुम्बको महत्वपूर्ण दायित्वमध्येको एक हुन्, वृद्धा आमा बाबुलाई मानसिक खुराक ‘दिइरहनु पर्दछ, यो दायित्वबाट बिचलित हुन खोज्यौं भने जङ्गली प्रवृत्तिले गाज्दै लग्नेछन् भन्ने बुढ्यौली पक्षहरूको भनाइलाई पनि वास्तवमा नकार्न सक्दैनौं ।

अत: छाछोंङमा प्रथाबाट आउने जाने क्रमलाई अघि सार्छन । यस पटक नवजोडिहरू माइतघरमा आठदश दिनै बस्दछन । सालासालीहरूको माध्यमबाट जिस्किने ठट्टिने क्रममा ज्वाँइलाई ससुरालीहरूसँग नजीक तुल्याउँछन भने सासुससुराहरूले उनलाई छोराकै रूपमा घरभित्र पाउन थाल्दछन । क्रमिक रूपमा आउँछन, बस्छन खान्छन; रमाइलो गर्छन जान्छन; फेरि आउँछन जान्छन आमा बाबुहरू पनि यदाकदा छोरीलाई भेटन पुग्छन । बस यो क्रम यसरीनै अगाडि बढाउँछन, र उनीहरूका सन्तानहरू पनि यही क्रमसंग अघि बढछन, जुनी बिताउँ-छन । साँसारीक गतिको क्रम पनि वास्तवमा यही नै हो ।



# "लुमन्ति"

**[श्री ५ को सरकारले नेपालभाषाप्रति गर्दै आएको अमानुसिक ब्यवहारहरू सम्झनाको लागि यहाँ प्रस्तुत गरिएको हो । सं०]**

ने. स. ८८८ मा नेपालमा नेवा: जातिका राजा-लाई गोर्खाली राजाले जितेपछि नेपालभाषाको विस्तारै विस्तारै ह्रास हुँदै गएको हो ।

ने. सं. ९७४ मा श्री ५ महाराजाधिराज सुरेन्द्र बीर विक्रम शाहको पालामा कुनै पनि सरकारी अड्डामा नेपालभाषाबाट लेखिएको पत्रहरू स्वीकृति हुने छैन भन्ने ऐन निकालियो ।

ने. सं. १०२५ मा नेपालभाषालाई वहिष्कार गर्नको साथै चलिरहेको नेपाल संवतलाई समेत पन्छाई दियो ।

ने. सं. १०४४ मा "धर्मसार" कविताका कवि श्री योगवीर सिंह र यस कविताको प्रकाशक भवानीवीर सिंह दुवैलाई रू. १०।१० जरिवाना गरियो ।

ने. सं. १०५१ मा ‘बुद्ध धर्म र नेपालभाषा’ पत्रिकामा अरूको हिंसा गर्नु हुन्न भनी कविता लेखेको अभियोगमा कवि योगवीर सिंह र सिद्धिरत्न कसा: ज्यूलाई देश निकाला गरियो ।

ने. सं. १०५४ मा "बुद्ध धर्म र नेपाल भाषा" पत्रिकाका लेखकहरू सबैलाई श्री ३ जुद्ध शम्सेरले जावला-खेलमा बोलाई अबदेखि नेपालभाषाबाट कुनै पनि लेख नलेख्नु भनी डर धम्की दिइयो ।



ने. स. १०६० (वि. सं. १९९७) मा चित्तधर हृदयको साथै अन्य ३० जनालाई जेलको यातना दिइयो ।

ने. सं. १०६० मै नेपालभाषाका र विहारमा रहेका पुस्तकहरू जफत गरियो ।

ने. सं. १०६० मै नेपालभाषाका गीतकार श्री शुक्रराज शाश्त्रीलाई प्राणदण्ड दिइयो ।

ने. सं. १०६३ (वि. सं. २०००) मा ज्ञानमाला भजन गर्ने र पुस्तक बेच्नेहरूलाई सजाय दिइयो ।

ने. सं. १०६४ (वि. सं २००१) मा नेपालभाषा-बाट धर्मोपदेश दिने भिक्षुहरूलाई देश निकाला गरियो ।

ने. सं. १०६७ (वि. सं. २००४) मा नेपालभा-षाका कुनै पनि पत्रिका प्रचार गर्न स्वीकृती लिनुपर्ने नियम बनाइयो ।

ने. स. १०७७ (वि. सं. २०१४) मा एकेडेमीको स्थापना भयो । नेपालको विभिन्न भाषा, कला, संस्कृतिको विकास गर्दै जाने उद्देश्यले स्थापना भएको यस संस्थाले नेपाली, अंग्रेजी र लाप्चा भाषाको शब्दकोष (वि. सं. २०२७), नेपाली; अंग्रेजी र लिम्बू भाषाको शब्दकोष (वि. सं. २०२८) र मैथिली भाषाको विद्या ,पदावली (वि. सं. २०२९) प्रकाशित गऱ्यो । जबकि २०३३ सम्म यस सँस्थाले नेपालभाषाको किताव एउटा पनि प्रकाशित गरेन । यति सम्म कि नेपालभाषाका कुनै कविलाई मान पदवि दिई सम्मान गर्नुको बदला सदस्य सम्म पनि बन्न दिएको छैन ।

ने. सं. १०७७ मा नेपालभाषा पत्रिका (दैनिक) लाई कारवाही गरी केही वर्षसम्म प्रकाशन समेत बन्द गराइयो ।

ने. सं. १०७९ (वि. सं. २०१६) मा नेपालको संविधान घोषणा भयो। यस घोषणा अनुसार नेपाली भाषालाई राष्ट्रभाषाको रूपमा संवैधानिक स्थान दिइयो । अरू भाषाबारे सरकारी नीति नै स्पस्ट गरिएन ।

ने. सं. १०८३ (वि. सं. २०२०) मा नेपालभाषा पत्रिका " क्वी" सँग सम्वन्धितलाई काठमाण्डौ मजिष्ट्रेट-द्वारा ष्पस्टीकरण लिइयो ।

रेडियो नेपालबाट दिने गरेको नेपालभाषाको समाचारलाई पनि ने. सं. १०८३ (वि. सं. २०२०) मा कटौती गरियो ।

ने. सं. १०८५ मा; रेडियो नेपालले नेपाल-भाषाको समाचार कटौती गरेको विरोधमा विभिन्न ठाउँमा लगातार १ वर्षसम्म साहित्य सम्मेलन भैरहे । तर, ती सम्मेलनहरूमा भाग लिने धेरै साहित्यकारहरूलाई समात्ने दु:ख दिने गरियो ।

ने. सं. १०९१ ( वि. सं. २०२८ ) मा धर्मरत्न यमिको उपन्यास "आङ्ल्हीमो" जफत गरियो ।

ने. सं. १०९१ मै नेपालमा नयाँ शिक्षा योजना लागू भयो । यस योजना अनुसार जापानी, अंग्रेजी, फ्रेन्च जर्मनी, पुर्तगाली आदि २४ वटा इच्छाधिन विषयहरू मध्ये एउटा लिन पाइने गराइयो । तर, नेपालभाषालाई भने माध्यमिक तहसम्म र विदेशी भाषाको स्तरमा स्थान दिइयो ।

ने. सं. १०९१ मा नै कक्षा ६ र ७मा नेपालभाषा पढन नपाइने गरियो।

ने. सं. १०९१ मानै क्याम्पसमा पनि भर्नाकुलरको रूपमा नेपालभाषा पढन नपाइने गरियो ।

ने, सं. १०९१ मैं नेपालभाषाबाट प्रसारण गर्ने

गरेको "जीवन दबू" नामक कार्यक्रम रेडियो नेपालबाट निकालियो।

ने. सं. १०९१ मा देशमा अवैधानिक तरीकाबाट जनसंख्या तथ्याँक लिई नेवा: जातिको संख्या कम गरी देखाइयो।

ने. सं. १०९४ (वि. सं. २०३१) मा भक्तपुरमा भएको वि० ने० भा० साहित्य सम्मेलनमा नेपालभाषामा स्वागत गीत गाउन दिइएन।

ने. सं. १०९६ ( वि. सं. २०३३ ) मा विज्ञान अध्ययन संस्थान र व्यापार तथा प्रशासन अध्ययन संस्थान बाट ऐच्छिक विषयको रूपमा राखिएको नेपालभाषालाई पाठ्यक्रमबाट हटाइयो।

ने. सं. १०९६ मा शिक्षा राज्यमन्त्रीद्वारा देशभित्रको सबै भाषालाई दमन गरेर नेपाली भाषालाई मात्र फलाउने फुलाउने जस्तो दुष्प्रयास गरियो।

ने. सं. १०९७ (वि. सं. २०३४) मा नेपालभाषाका सबै पत्र-पत्रिकाहरूको रजिष्टर्ड बन्द गराइयो।

ने. स. १०९९ (वि. सं. २०३६) मा ऐतिहासिक विद्यार्थी आन्दोलनमा विद्यार्थीहरूले "आफ्नो भाषाबाट पढ्न पाउनै पर्छ" भन्ने राखेको मागलाई आजसम्म पूरा गरिएको छैन।

ने. सं. १०९९ मा सरकारी साधनले जनमत संग्रहको प्रचार र प्रसार कार्य नेपाली भाषाले मात्र गऱ्यो। यसको विरोधमा काठमाण्डौको मङ्का खल:ले विभिन्न ठाउँमा गरेको आमसभालाई पनि वास्ता गरिएन।

ने. सं. ११०० (वि. सं. २०३७) मा काठमाण्डौको मङ्का खल:ले भाषा प्रति सरकारी असमान व्यवहार गरिएको सम्बन्धमा विरोध जुलुसद्वारा नगर परिक्रमा गऱ्यो तापनि यस विषयमा समेत सरकारी तवरबाट वास्ता गरिएको छैन।

साभार– "तयजू" अङ्क-क्विगु पृष्ठ-५४-५७

अनु० **तुलसीनारायण डङ्गोल**

❀

# अनुत्तरित अवस्था

**–गङ्गाराज राई**

बिहान सबेरै छ, बिउँझेको मात्र हुन्छु।
मेरो कान्छो छोरो सुटुक्क छेउमा आउँछ
अनि उत्सुकतापूर्वक अनुहारमा हेर्दै सोध्छ,
"बुबा ! ठूला ठूला देशहरूले बम बनाएको हुन्छ' रे
त्यो बम हामीमाथि गिऱ्यो भने–
हाम्रो ज्यान जान्छ' रे हो ?"
लामो समयदेखि यस प्रश्नको उत्तर खोजी रहेकै
निर्निमेष हेर्दै उत्तरको प्रतिक्षारत छोरोलाई म भन्छु,
"छोरा ! हामी माथि बम कसैले पनि गिराउँदैन
यस्तो कुरा तिमीलाई कसले सिकायो ?',
छोरोलाई प्रश्न गरेर अलमल्याउन मात्र खोज्छु
तर ठूला ठूला र बलिया देशहरूले
बम बनाएको कुरा असत्य हो
अनि बमले मानिसको हत्या गर्न सक्तैन भनी
उसलाई जवाफ दिन भने म सक्तिन।

---

तपाई यत्ति सबल बन्नोस कि तपाईलाई चिन्ताले छुँदै नछुवस। –एक विद्वान

---



# शेर्पा जाति : एक संक्षिप्त परिचय

**– पासाङ तेम्बा धूम्रकेतु शेर्पा**

शेर्पाहरू तिब्बतबाट अन्दाजी सातसय वर्ष पहिले पूर्वी नेपालमा आएर बसोबास गरेको अनुमान छ। प्रचलित अनुमान अनुसार "सक्यो जंगुरे" नाम गरेको एक मङ्गोल शासकले तिब्बतमा गोलुक्पा बौद्ध मतको धर्म प्रचार गर्ने सिलसिलामा निङमापा मतका मानिसहरूको धर्म परिवर्तन गर्ने र नचाहेमा प्राणदण्ड समेत दिने गर्ने गरेको हुँदा तिनीहरू ठूलो संख्यामा पहाड-पर्वत, हिमाल काटेर आएका हुन्। शेर्पाहरूको बस्ती सबभन्दा पहिले खुम्बुमा भएको थियो र पछि मात्र सोलुतिर फैलिएको अनुमान गरिन्छ।

तिब्बती भाषामा "स्यार" भनेको पूर्व र "बा" को अर्थ बस्ने हुन्छ। "स्यार्बा" अर्थात 'पूर्वतिर बस्ने मानिस' को पछि अपभ्रंश भई "स्यार्पा" अथवा "शेर्पा" भनिन थालेको हो। शेर्पाहरूको घना बस्ती सगरमाथा अञ्चलको सोलुखुम्बुमा भएको हुँदा सोलुखुम्बुलाई "स्यार्-खुम्बु" पनि भनिन्छ। हिमालय काटेर दक्षिण झरेपछि खेतीयोग्य जमीनको खोजीमा हिंड्दा उनीहरूको त्यस ईलाकाका 'राई' जातिसँग संघर्ष हुन गयो र पछि राजाबाट "शेर्पा" अर्थात् "पूर्वतर्फ बस्ने मानिस" भनी लालमोहर पाए। अहिलेसम्म पनि शेर्पाहरू राई जातिका मानिसहरूलाई 'डोङ्बु', 'जिमी' अर्थात् उहिलेका जमीन्दार भन्ने गर्दछन्।

शेर्पाहरू मङ्गोल कुलका मानिसहरू हुन्। शेर्पाहरू तिब्बती जस्ता देखिएता पनि यिनीहरू तिब्बतीहरूभन्दा धेरै भिन्न हुन्छन्। यिनीहरूको कद छोटो, शरीर हृष्टपुष्ट, कपाल कालो र बाक्लो, चिम्सो बदामे आँखा, नाक चेप्टो, चिउँडो डल्लो परेको हुन्छ। शरीरको रङ्ग गहुँगोरो हुन्छ। बाक्लो दाह्री जुंगा हुँदैन। आइमाइहरूको कपाल कालो, टल्कने र लामो हुन्छ।

शेर्पाका विभिन्न थरहरू हुन्छन्। जस्तै :गोले, लामा, छुसेबा, चियाबा, गोपर्मा, हिगोर्मा, लाकसिन्दु, मेन्दे, मोपा, डावा, पालदोर्जे, याङ्कर्मा, पिनासा, खम्बजे, सलाका इत्यादि। हालसालै 'ठिले' थर पनि सुनिन थालेको छ। यो ठिले थर शेर्पाहरूका एक प्रतिष्ठित व्यक्ति कहलिएका व्यक्ति श्री आङ्दामी शेर्पाले चलाएका हुन्। आफ्ना छोराहरूमा उनले यो ठिले थर राख्दै जानु भनेका थिए। यसपछि क्रमश: अन्य गोले शेर्पाहरूले पनि ठिले थर लेख्न थालेपछि यो ज्यादै प्रचलित भएको छ।

शेर्पाहरू जाडो हिउँलाई अँगाल्दै हिमालको

काखमा बस्ने हुनाले यिनीहरूको वेशभूषा प्रायः तिब्बती-हरूसंग मेल खान्छ। यिनीहरू एक प्रकारको दौराजस्तो 'छुबा' र सुरूवाल जस्तो 'नाङ्गोय' लगाउँछन् । शेर्पा आईमाइहरू 'बक्खु' अथवा 'अङ्गी' लगाउँछन् र त्यसभित्र 'बङजुर' लगाउँछन् । साथै एक प्रकारको कमीज जस्तो 'स्यामज्यार', अनि खुट्टामा दोचा, जसलाई शेर्पा भाषामा 'काचा' भनिन्छ, लगाउँछन् । आईमाईहरू कम्मर मुनि अगाडि र पछाडि बाक्लो उनीको तेर्सो धर्के कपडा लगाउँछन् । त्यसको अगाडिको भागलाई 'डोङदिल' र पछाडिको भागलाई 'गोप्टिल' भनिन्छ । साधारणतया यो डोङदिल र गोप्टिल विवहिता आईमाईहरूले मात्र लगाउँछन् । शीतबाट बच्न टाउकोमा लगाउने टोपीलाई शेर्पा भाषामा 'छिरिङ किमा स्यहमु' भनिन्छ । शेर्पाहरू गहनाहरूलाई विशेष महत्व दिन्छन् । यिनीहरू कान, हात र छातीमा गहना लगाऊँछन् । यिनीहरूमा सम्पन्न हुनेखानेहरूको प्रायः शरीर आधाजसो गहनाले सिंगारिएको हुन्छ ।

शेर्पाहरूको मुख्य पेशा पशुपालन हो । केही वर्ष यतादेखि फलफूल खेती गरी पनि अर्थ उपार्जन गर्न थालेका छन् । आजकाल बढ्दो विदेशी पर्यटकहरूसंगको सम्पर्कले यिनीहरूको आम्दानीको स्रोत प्रायः पर्यटक - पथ प्रदर्शक र पर्वतारोहण भएको छ । कतिपय शेर्पाहरूले राजधानीमा र विदेशमा समेत 'ट्रेकिङ्ग शप', ट्राभेल एजेन्सी' इत्यादि खोलेर बसेका छन् ।

शैक्षिक क्षेत्रमा कमजोर आर्थिक स्थिति र दुर्गमताको कारणले गर्दा शेर्पाहरू पिछडिएका छन् । कन उच्च शिक्षा हासिल गरेका तथा गर्दैरहेका शेर्पाहरूको संख्या त औंलामा गन्न सकिने अवस्थामा छ । तसर्थ यिनीहरू शैक्षिक क्षेत्रमा श्री ५ को सरकारले विशेष सुविधा सहुलियतको व्यवस्था गरिदिने आशामा छन् ।

शेर्पाहरू बौद्ध धर्मावलम्बी भएका हुँदा शेर्पा सँस्कृतिको प्रमुख स्रोत लामा धर्ममा रहेको छ । शेर्पाहरूमा मानिसहरूको जीवन पद्धति र धार्मिक अधिष्ठानहरू लामाद्वारा सञ्चालित हुने हुनाले शेर्पा–संस्कृति रीति-स्थिति बौद्ध धर्मका स्थानीय गुम्बा तथा लामाहरूद्वारा निर्देशित हुन्छ । शेर्पाहरू विशेष गरी आफ्ना राजा तथा अवतारी लामालाई देवता झैं मान्दछन् । राजालाई भगवान बुद्धको अर्को अवतार ठान्दछन् । शेर्पा जातिका प्रतिष्ठित लामाहरू संधै गुम्बामा बस्दछन् ।

शेर्पा समाजमा मनाइने चाडहरूमा नयाँ वर्षारम्भको रूपमा मनाइने ल्होसार, मानिरिम्दू, दुम्जे, बडादशैं र तिहार हुन् ।

शेर्पाहरू विवाहलाई ठूलो हर्षोल्लासको वातावरणमा सम्पन्न गर्दछन् । विवाह मुख्यतया तीन प्रकारद्वारा हुन्छ । ती हुन :– १) घरबाट छानेर, २) प्रेम गरेर, ३) भगाएर । तर यी मध्ये घरबाट छानेर गरिने विवाहलाई नै विधिवत् विवाह मानिन्छ । साधारणतया शेर्पाहरूको विवाहमा पांच विधिहरू अपनाइन्छन् ।

क) टि छयङा:– केटाको घरबाट केटीको घरमा छयाङ (जांड) र फेमार (घ्यू र पीठो मुछेर बनाइएको एकप्रकारको केक) लिएर केटी माग्न जान्छन् । छ्याङ, फेमार र खादा(गलबन्दी जस्तोसेतो पातलो कपडा) समेत केटीको अभिभावकले स्वीकारेमा बिवाहका अन्य विधिहरू पनि शुरू गरिन्छ र यदि स्वीकार नगरेमा कुरा नमिलेको ठहरिन्छ, अनि ती वस्तुहरू पनि फिर्ता ल्याइन्छन् तर धेरैजसो स्वीकारेको पाइन्छ ।

ख) देमज्याङ्ग :– शेर्पाको विवाह प्रथामा देमज्याङ्ग सबैभन्दा महत्वपूर्ण मानिन्छ । केटा र केटीको



सम्बन्ध देमज्याङ्गबाट हुन्छ । रोचक कुरा के छ भने देमज्याङ्ग विधि सम्पन्न भैसकेपछि केटी अरूलाई दिन पाइँदैन । देमज्याङ्गमा पनि केटाको तर्फबाट छयाङ फेमारका साथै तीस पाथी अन्न केटीको घरमा लगिन्छ । अन्न लैजानुको खास अर्थ पछि पूरा विवाहमा फेमार केटीका अन्य पूरै नातेदारहरूलाई पुऱ्याउन नसके नरिसाउनु होला भन्ने जनाउनु हो । तीस पाथी अन्न नलैजाने हो भने सम्पूर्ण नातेदारहरूलाई फेमार पुऱ्याउनै पर्दछ । यसरी देमज्याङ्ग बिधिद्वारा केटा र केटी अबदेखी लोग्ने–स्वास्नी भए भनी जनाइन्छ । यो विधि समाप्त भैसकेपछि केटालाई भावी ससुरालीमा गई केटीसंग रात बिताउने अधिकार प्राप्तहुन्छ र केटी गर्भवती भएको खण्डमा अर्को विधि जति सक्दो छिटो गरिन्छ । कारण पूरा विहे नभई जन्मेको बच्चालाई 'नांगुन' या 'ठेमसिङ' भन्ने चलन भएकोले तुरून्त अर्को विधि अपनाइन्छ ।

ग) पेध्याङगु :– बिवाहको अन्तिम तिथि निधो गर्न दुवै सन्धीहरूले आपसमा सल्लाहको लागि भेट्ने कामलाई 'पेध्याङ्ग' भनिन्छ । यसमा पनि केटीको घरबाट फेमार, खादा र छयाङ कोसेली लाने गरिन्छ ।

घ) ग्याँ कुतु :- विवाहको तिथि निर्धारित भए अनुसार 'ग्याँ कुतु' गरिन्छ । यो विवाहको अन्तिम विधि हो । यसमा केटा र केटीलाई दुलहा र दुलही बनाईन्छ । जन्ती गएका मानिसहरूलाई केटीका घरमा छयाङ खुवाई स्वागत गर्दछन् । त्यहाँ पाहुनाचार 'ड़ेन' हुन्छ । जन्ती आएको सूचना गर्न केटीको घरका छेउमा पुगेपछि भरूवा बन्दूक पड्काउँछन् । अनि केटीतर्फका मानिसहरूमध्ये दुइजना केटीहरू ढोकामा 'याङजी' अर्थात स्वागत गर्न जान्छन् । जन्ती आएका मानिसहरूको घर भित्र आगमन भएपछि 'सुरज्याङ्ग' गर्छन् । यस विधिमा धूपीको धूप बालेर छयाङमा पात चोपेर जन्तीलाई छर्कन्छन् र छयाङ खान्छन् । पीठो पनि छर्कने गरिन्छ । अन्तमा सबैलाई खादा उपहार दिइसकेपछि नाच–गान शुरू हुन्छ । ग्याँ कुतु सकिएपछि दुलहीलाई दुलहाको घर लगिन्छ ।

ङ) टोङ्था लङसिकिरू :– विवाह भएर बच्चा जन्मेपछि पनि दाइजो माग्नको लागि फेरि एक पटक विवाह गरिन्छ । त्यसमा केटाको घरबाट प्रशस्तमात्रामा कोसेली लगिन्छ । पछि भोज सकेर नाचगान गरेपछि दाइजो मागेर लैजान्छन् ।

शेर्पा समाजमा मानिस मर्दा विवाहको भन्दा पनि धेरै बिधिहरू गरिन्छन् । गरीब परिवारमा मानिस मरेमा सो परिवार ठूलो ऋणमा डुब्छ भनिन्छ । मर्दा गरिने विधिहरू धार्मिक प्रकारका हुन्छन् ।

मानिस मरेपछि लाशलाई सेतो कपडाले छोपिन्छ । धर्म अनुसार अन्त्येष्टि गर्न लामा र मुर्दा बोक्ने मानिसहरू बोलाइन्छन् । लामाले कुनै कुनै बेला मरेको मानिसको केही कपाल झिकेर उसको प्राणलाई बाहिर जाने बाटो दिन्छ । त्यसो गर्दा प्राणलाई सोझै स्वर्ग-आरोहण गराउन मन्त्र पाठ गरिन्छ । मरेको मानिसको आत्मा ४९ दिन सम्म घरमै घुमिरहन्छ भन्ने प्रचलित विश्वास छ । लामाले पाँच पटकसम्म 'फो ग्यू' नामक ग्रन्थको पाठ गरिसकेपछि मुर्दालाई कुन दिशामा कसरी संस्कार गर्ने भन्ने थाहा पाउन 'छिः पि' ग्रन्थ र 'ददुर' (पात्रो) को अध्ययन गरिन्छ । लामाको सल्लाह अनुसार मुर्दा गाड्ने जलाउने अथवा नदीमा बगाउने निर्णय गरिन्छ ।

मानिस मरेको घरबाट दश फाल्न 'तोर्मा' (पीठो मुछेर बनाएको एक प्रकारको पुतला) बनाई क्रिया बस्ने

तथा 'भूत' बनाई बाहिर फाल्ने विधि गरिन्छ। त्यसपछि 'टोटुल शेटु' ग्रन्थ पाठ गरी मर्ने व्यक्तिलाई पापबाट मोक्ष दिलाउने तथा 'शिन्जे छोग्याल' (यमराज) कहाँ जाने शिक्षा दिइन्छ। मरेको दिन र अन्त्येष्टि गर्ने दिन केही घण्टादेखि सात आठ दिनसम्मको फरक पनि हुन्छ।

साधारणतया ठूला मानिसलाई जलाउने र बच्चाहरूलाई गाड्ने गरिन्छ। दाह–संस्कारको लागि लगिने मुर्दा लामाले निधो गरेको स्थानमा लामाहरू र लामाको सल्लाहानुसार मलामीहरू सहित चलाइन्छ। मुर्दा लग्दा शङ्ख फुक्दै ध्वजा अघि लगाएर लस्करै लगिन्छ। रून मनाही हुन्छ, कारण रोएमा प्राण लामाले दिएको निश्चित दिशा अनुरूप जांदैन भन्ने भनाई छ। चितामा आगो लगाएपछि लामाको हातबाट मन्त्र पाठ गर्दै दाह गरिन्छ।

मुर्दाको अन्त्येष्टि गरेको दिनदेखि 'नापुर' भन्ने विधि नसकिएसम्म लामाहरूद्वारा 'टोटुल शेटु' को पाठ गराउनु पर्दछ। नापुरमा लामाले घरमा रूमल्लिरहेको 'सेम' (प्राण) लाई घर र भौतिक संसारको माया छोडी जाने संकेत दिई अनेक मन्त्र गरी मरेको मानिसको नाम लेखिएको कागजको टुक्रा जलाइदिन्छ। त्यसदिन नाता-कुटुम्ब छर–छिमेकीलाई खुवाउने गरिन्छ।

मरेको आठौं दिनमा घर चोख्याउनका लागि 'ड़ेन्जीङ्ग' गरिन्छ। उनान्चासौं दिनभित्र 'कोन्चोक चिन्दुयी' को पाठ गरिन्छ र पछि शेटु गर्दा नाताकुटुम्ब तथा लामाहरूलाई भोज खुवाउने गरिन्छ। गरीबहरूलाई दान दिइन्छ। यसरी गरिने अन्तिम काजक्रियालाई 'ग्वबा' र सबै विधि जनाउनेलाई 'छचङ्गा' भनिन्छ।

शेर्पाहरू परिस्थिति र समयानुसार निकै आधुनिकतामा ढल्की सकेका छन्। विदेशी पर्यटकहरूको संगत आफ्नो जातीका केही मात्रमा भए पनि उच्च शिक्षा हासिल गर्नेहरूको संगतले गर्दा अनेकौं कुरामा यिनीहरूले सुधार गर्दै आएका छन्। फेशनतिर हेर्दा बख्खुको सट्टा प्याण्ट, कमीज, दोचाको सट्टा जुत्ता लगाउन थालेका छन्। प्रेम-विवाह पनि प्रचलित भैसक्यो। चाहेमा एकदिनमै कुरा मिलाएर त्यसैदिन विवाह गरेको पनि देखिएको छ। फेमार र छ्याङको सट्टा केक र रम, बियर कोसेली लैजाने पनि थोर – बहुत देखिदै आएका छन्। मर्दा नाता–कुटुम्बहरूलाई बोलाउने चलन प्राय: हराइसक्यो।

शेर्पाहरूको संख्या नेपालमा लगभग ५४,०००जति छ। यिनीहरूको भाषा आफ्नो प्रकारको छ। यो भाषा लगभग ३० प्रतिशत तिब्बती, ३० प्रतिशत तामाङ्गी, २० प्रतिशत जिरेली १० प्रतिशत गुरूङ्ग र बांकी १० प्रतिशत अन्य भाषाहरूसंग मेल खान्छ।

–मधुपर्क, वर्ष- १३ अंक- ४ पृ.- ५५–६०



## आइन्कान् झारा मनाङे

अका साङ्ओ ? खाना साङओ ?
मोची साङची ? ओची साङची ?
आइन्कान् साङ ? झारा मनाङे
चाखाङ चासी खाना ने !

अंका, खाना, मोची, ओची, ह्याउची
झारा आइन्कान् नी माआङे, मनाङ !
अक्नीङा चाखाङचासी युंङ्ने

– रङाबुङ राई

## "खवरदार – कुर्सीको लोभमा फसेर आफ्नो अस्तित्व नबेच"

रचना:- किराँती, थिक लाजेसा लिम्बू
तेह्लथुम–लिम्बुवान

नीति के हो शाश्त्र के हो , के हो राजनीति ?
धर्म के हो बेद के हो के हो तिम्रो लिपि ?
त्यसैले त मैले यहाँ, भन्न सकिन
तिम्रो ढिपी क्या हो भनि जान्न सकिन ।

धर्म मेरो हिन्दू भन्छौ, तिम्रो मूल कहाँ हो ?
मंगोलियनको नाग दिन्छौ, तिम्रो आधार के हो ?
किराँतीको सन्तान हुँ भन्छौ, घरमा पण्डित पढाई
मन्त्री हुँदा ठूलो भएँ ठान्छौ, आफ्नू लिपि दबाई ।

तिमी जस्तो मन्त्रीले त, भाषा खोज्नु पर्ने
किन कूल बंश त्यागी, शूद्र हुनु सर्ने ?
तिम्रो पनि भाषा अनि, इतिहास र लिपि थियो
तिम्रो आफ्नो संस्कारमा, "किराँतीको बेद" थियो ।

खबरदार किराँती हो आफ्नो भाषा चिन
रूपैंया र पैसामा बिकी, जात बेची नहिंड
राजनीति जोत्छु भन्छौ, आफ्नु बंशज मिची
कुर्सीको लोभमा शूद्र हुन्छौ, आफ्नो अस्तित्व बेची ।

निक्शन, जेरल, कार्टर, जोहनसन पनि त मन्त्री नै हुन्
के त तिनले गोरोलाई कालो हुनु पर्छ भनेका छन् त ?
अनि हिरो हिटो, वाङचोक, पनि त महामहिम राजानै हुन्
के त तिनले पनि हिन्दी नै बोल्नु पर्छ भनेका छन् त?

यस्ता सरकार, यस्ता मन्त्री, यही देशमा जन्मे
मातृत्वको अस्तित्व मिटाई, बिदेशी लयमा बढ्ने
त्यसैले त होला, यो देश, फुल्न कहिल्यै सकेन
बिश्व काहां पुगीसक्यो, आफ्नो नेपाल देखेन ।



## "एक पल्ट दिन आउला"

रचना:– किराँती, हरीहाङ्ग लिम्बू चोङ्गबाङ्ग
संगित:– किराँती, थिक लाजेसा लिम्बु
तेह्लथुम, लिम्बुवान

संकेर बसौं घरवार छैन, हिंडेर जाउँ कता पो
साहुको भारी बोकेर हिँडदा, जिन्दगी बर्वाद भयो
सरदु खोलमा टेकान लगाए, अनुहार भरी पसिना तुरूरू
जिन्दगी मेरो संकेर ल्याउँदा, मन रून्छ धुरूरू

घरवारी मेरो चाहिन्दो थियो, साहुले छिनायो
संकेर ल्याउँदा अत्याचार छनै, गरीबको दिनगो
सांगुरी पुग्दा हुरूक्कै हुन्छ, सास मेरा जोडिन्न
संकेर ल्याउदा यो साहुसंग रीस मेरो मर्दैन

घरवारी समेत छिनाएर पनि, भारी नै बोकाउँछ
जति नै सछियो यो मनमा मेरो रीस मात्र उठदछ
यो भारी म त बोक्तिन अब, भिरबाट फालिदिन्छु
गरीवैसंग चिनिदै जान्छु, माँयैले मिल्दछु

अत्याचार सहन धेरै दिन छैन, दुई दिन पर्खौंला
गरीव हामी मिलेको दिन, जालीलाई चखौंला
जालकितेँ गरी लिएको घरवारी लडेर फर्कौंला
संसारका गरीव तम्सेर हामी विश्व नै थर्कौंला

# आत्महत्या अपराध........

—भूपाल 'विवश' राई
भोजपुर

म त बेचिदा बेचिदा थोत्रो भइसकेको आत्मा
अव त मेरो मूल्य नै हराइसकेको छ,
म त किनिदा किनिदा खिइसकेको बस्तु
अव त मेरो अस्तित्व नै विलाइसकेको छ
त्यसैले अफसोस छ
मैले आफ्नो तिर्खाएको प्यासी आत्मालाई
आफ्नै पसिनाले पनि तृष्णा मेटाउन सक्तिन भने
मैले आफ्नो भोकाएर छटपटीरहेका प्रत्यङ्गहरूलाई
आफ्नै रगतले पनि जिउँदो राख्ने स्वतन्त्र पाउँदिन भने
अव त यस्तो लाग्छ कि
कसैले याँहा बाँच्नको लागि
आँखा, नाक, मुख र कान बन्द गरेर आउनुपर्छ
न्याय पनि यति कमजोर देख्छु
जतातत्तै अन्यायको फाँसीमा कुण्डिरहेको पाउँछु
अधिकार पनि यति महङ्गो देख्छु
जतातत्तै रूपैयाको विटाविटामा कुण्डिरहेको पाउँछु
त्यसैले होला सायद,
न्यायको चतुर र निष्पक्ष आँखा अगाडि
यहाँ निर्दोष ब्यक्तिले पनि अपराधि ठहरिनुपर्छ
बाँच्ने स्वतन्त्र खोज्नेहरूले पनि
यहा जेल र हतकडिको स्वागत गर्नु पर्छ,
अत:
मलाई सवैसवैले क्षमागरिदेऊ
किनभने यहाँ बाँच्न खोज्नु पनि न्यायको विरूद्ध हुन्छ, रे
अव त यहाँ म, म आफै मृत्युको प्रतिक्षामा छु
किनभने यहाँ आत्महत्या पनि अपराध हुन्छ, रे ।



# "के भक्ति गर्नें नभा'को देउताको"

— कैलास तामाङ्ग

लौ भन आमा,
देउता संङ्गि कन्जिल पुज्ने यो ढुङ्गे मूर्तिलाई ?
पुर्खाहरू पुजेर बिते यो ढुङ्गा मूर्तिलाई,
छोराले पुजे नातीले पुजे यै निर्जीव मूर्तिलाई ।
आमा लौ बांचो भनन,
दु:खको तापमा हे भगवान ! भनी पुरपुरो टेकायौं,
सुनेन कानले बोलेन कैल्यै ढुङ्गाको थुतुनो,
हर्दैला दु:ख भनेर हामीले के पनि भाकेनौं ?
चढायौं बलि ढुङ्गाको शीरमा रगतको खोलो नै बगायौं ।
आमा अव त भनी देऊ,
भएन केही गरीवको लागि यो पापी पत्थरले,
धर्म र पाप जालीका कुरा कां बुझयौं हामीले ?
सुख र दु:खको उसर्दिनको फल भन्दियो जालीले,
छाति नै फुट्ने वेदना हाम्रो के बुझ्यो पत्थरले ?
लौ आमा नढाँटी भन त,
कसले देख्यो देउताको रूप अवतार फेरेको ?
न तार आयो न खवर आयो स्वर्ग र नरकको,
क्यै अत्तो छैन क्यै पत्तो छैन बितेका पुर्खाको,
सुख होला भनि के भक्ति गर्ने नभाको त्यो देउताको ?



भत्काऊ वाँधहरू, पडकाऊ ज्वालामुखीहरू निमुखा-प्रति दवाब छ । यहाँ मुक्तिको बिगुल फुक्दै चुडाऊ बन्धनका प्रत्येक सिक्रीहरू ।

— प्रकाश बुढाथोकी



# मेरो विचार ○

श्रीमती सूर्यकुमारी चौधरी
धधरपा, वारा

विकास प्रकृतिको नियम हो । यसै नियमको आधारमा मानिस जातिको पनि विकास भइरहेको छ । मानिस भौतिक सुखको पराकाष्टासम्म पुगेको छ । शायद यही कारणले होला मानिसले आज आश्चर्यजनक तवरले डरलाग्दा संहारकारी वस्तुहरूको सृजना गरेको छ र खोज द्रुत गतिले जारी नै छ । मानिसकोबुद्धिले गर्दा नै राजनीतिक क्षेत्रमा, संस्कृतिको क्षेत्रमा र अन्य विभिन्न क्षेत्रमा निरन्तर विकास भइरहेको छ । तर, यही मानिस जाति मध्य थारू जाति पशुताको जीवन बिताउन बाध्य भएको छ । यस जातिमा मानवमा भएको गुण, बुद्धि र शक्ति नभएको होइन, तर पनि विकासको दौडमा सबभन्दा पछि रहेको र बुद्धि, शक्ति र गुणले आफ्नो कार्यक्षमता देखाउन असमर्थ भएको देखिन्छ, साँच्चै भन्ने हो भने थारू जाति आजको विश्वमा सवभन्दा पछि रहेको देखिन्छ । शायद चाहेर पनि थारू जातिले आफ्नो जीवन स्तर माथि उठाउन र विकास गर्न सकेको छैन । इच्छा हुंदा हुंदै पनि यो जाति प्रतिस्पर्धाको बजारमा आफूलाई अगाडि बढाउन सकेको छैन । अझ भन्ने हो भने केही समय पछि यस बजारबाट यसको अस्तित्व नै मेटिने सम्भावना देखिन्छ ।

आज थारू जाति पछि परेको विभिन्न कारणहरू हाम्रा समक्ष देखापर्दछन् । अशिक्षा, बाल-विवाह नारीहरू-को अधिकारको हनन, द्वेश' डाह सामाजिक कुरीतिहरू र नाजायजमा धेरै खर्च गर्ने बानी, एकता र सहयोगको भावनाको अभाव र एक अर्कोलाई नीच देखाउने प्रवृत्ति इत्यादि इत्यादि थारू जातिमा विशेष गरेर देखिन्छ ।

शिक्षा मानिसको बुद्धिको विकास गर्दछ । मानिस-को नैतिकता पनि केही हदसम्म शिक्षामाथि भर पर्दछ । शिक्षाले नै प्रत्येक क्षेत्रमा मानिसलाई विकास गर्ने बाटो देखाउदछ । आज मानिस जाति शिक्षाका लागि तृषित छ, तर सबैले शिक्षा भेटाउँछन् र ? मेरो विचारमा शिक्षा संसारमा मानिसका लागि सबभन्दा महत्वपूर्ण चीज हो । मानिसले जे जति गरेको छ र जे जति गर्न खोजेको छ त्यो

○ यो लेख लेखिकाले थारू महा-सम्मेलनमा पाठ गरेकी थिइन् ।

# आत्महत्या अपराध........

—भूपाल 'विवश' राई
भोजपुर

म त बेचिंदा बेचिंदा थोत्रो भइसकेको आत्मा
अब त मेरो मूल्य नै हराइसकेको छ,
म त किनिदा किनिदा खिइसकेको बस्तु
अब त मेरो अस्तित्व नै विलाइसकेको छ
त्यसैले अफसोस छ
मैले आफ्नो तिर्खाएको प्यासी आत्मालाई
आफ्नै पसिनाले पनि तृष्णा मेटाउन सक्तिन भने
मैले आफ्नो भोकाएर छटपटीरहेका प्रत्यङ्गहरूलाई
आफ्नै रगतले पनि जिउँदो राख्ने स्वतन्त्र पाउँदिन भने
अब त यस्तो लाग्छ कि
कसैले याँहा बाँच्नको लागि
आँखा, नाक, मुख र कान बन्द गरेर आउनुपर्छ
न्याय पनि यति कमजोर देख्छु
जतातते अन्यायको फाँसीमा कुण्डिरहेको पाउँछु
अधिकार पनि यति महङ्गो देख्छु
जतातवै रूपैयाको विटाविटामा कुण्डिरहेको पाउँछु
त्यसैले होला सायद,
न्यायको चतुर र निष्पक्ष आँखा अगाडि
यहाँ निर्दोष ब्यक्तिले पनि अपराधि ठहरिनुपर्छ
बाँच्ने स्वतन्त्र खोज्नेहरूले पनि
यहा जेल र हतकडिको स्वागत गर्नु पर्छ,
अत:
मलाई सवैसवैले क्षमागरिदेऊ
किनभने यहाँ बाँच्न खोज्नु पनि न्यायको विरुद्ध हुन्छ, रे
अब त यहाँ म, म आफै मृत्युको प्रतिक्षामा छु
किनभने यहाँ आत्महत्या पनि अपराध हुन्छ, रे ।

# "के भक्ति गर्नै नभा'को देउताको"

– कैलास तामाङ्ग

लौ भन आमा,
देउता संझि कन्जिल पुज्ने यो ढुङ्गे मूर्तिलाई ?
पुर्खाहरू पुजेर बिते यो ढुङ्गा मूर्तिलाई,
छोराले पुजे नातीले पुजे यै निर्जीव मूर्तिलाई ।
आमा लौ सांचो भनन,
दु:खको तापमा हे भगवान ! भनी पुरपुरो टेकायौं,
सुनेन कानले बोलेन कैल्यै ढुङ्गाको थुतुनो,
हर्देला दु:ख भनेर हामीले के पनि भाकेनौं ?
चढायौं बलि ढुङ्गाको शीरमा रगतको खोलो नै बगायौं ।
आमा अब त भनी देऊ,
भएन केही गरीवको लागि यो पापी पत्थरले,
धर्म र पाप जालीका कुरा कां बुझयौं हामीले ?
सुख र दु:खको उसदिनको फल भन्दियो जालीले,
छाति नै फुट्ने वेदना हाम्रो के बुझ्थ्यो पत्थरले ?
लौ आमा नढाँटी भन त,
कसले देख्यो देउताको रूप अवतार फेरेको ?
न तार आयो न खवर आयो स्वर्ग र नरकको,
क्यै अत्तो छैन क्यै पत्तो छैन बितेका पुर्खाको,
सुख होला भनि के भक्ति गर्ने नभाको त्यो देउताको ?



भत्काऊ बाँधहरू, पडकाऊ ज्वालामुखीहरू निमुखा-प्रति दवाब छ । यहाँ मुक्तिको बिगुल फुक्दै चुडाऊ बन्धनका प्रत्येक सिक्रीहरू ।

– प्रकाश बुढाथोकी

# मेरो विचार ○

श्रीमती सूर्यकुमारी चौधरी
धधरपा, बारा

विकास प्रकृतिको नियम हो । यसै नियमको आधारमा मानिस जातिको पनि विकास भइरहेको छ । मानिस भौतिक सुखको पराकाष्टासम्म पुगेको छ । शायद यही कारणले होला मानिसले आज आश्चर्यजनक तवरले डरलाग्दा संहारकारी वस्तुहरूको सृजना गरेको छ र खोज द्रुत गतिले जारी नै छ । मानिसकोबुद्धिले गर्दा नै राजनीतिक क्षेत्रमा, संस्कृतिको क्षेत्रमा र अन्य विभिन्न क्षेत्रमा निरन्तर विकास भइरहेको छ । तर, यही मानिस जाति मध्य थारू जाति पशुताको जीवन बिताउन बाध्य भएको छ । यस जातिमा मानवमा भएको गुण, बुद्धि र शक्ति नभएको होइन, तर पनि विकासको दौडमा सबभन्दा पछि रहेको र बुद्धि, शक्ति र गुणले आफ्नो कार्यक्षमता देखाउन असमर्थ भएको देखिन्छ, साँच्चै भन्ने हो भने थारू जाति आजको विश्वमा सवभन्दा पछि रहेको देखिन्छ । शायद चाहेर पनि थारू जातिले आफ्नो जीवन स्तर माथि उठाउन र विकास गर्न सकेको छैन । इच्छा हुंदा हुंदै पनि यो जाति प्रतिस्पर्धाको बजारमा आफूलाई अगाडि बढाउन सकेको छैन । अझ भन्ने हो भने केही समय पछि यस बजारबाट यसको अस्तित्व नै मेटिने सम्भावना देखिन्छ ।

आज थारू जाति पछि परेको विभिन्न कारणहरू हाम्रा समक्ष देखापर्दछन् । अशिक्षा, बाल-विवाह नारीहरू-को अधिकारको हनन, द्वेश' डाह सामाजिक कुरीतिहरू र नाजायजमा धेरै खर्च गर्ने बानी, एकता र सहयोगको भावनाको अभाव र एक अर्कोलाई नीच देखाउने प्रवृत्ति इत्यादि इत्यादि थारू जातिमा विशेष गरेर देखिन्छ ।

शिक्षा मानिसको बुद्धिको विकास गर्दछ । मानिस-को नैतिकता पनि केही हदसम्म शिक्षामाथि भर पर्दछ । शिक्षाले नै प्रत्येक क्षेत्रमा मानिसलाई विकास गर्ने बाटो देखाउदछ । आज मानिस जाति शिक्षाका लागि तृषित छ, तर सबैले शिक्षा भेटाउँछन् र ? मेरो विचारमा शिक्षा संसारमा मानिसका लागि सबभन्दा महत्वपूर्ण चीज हो । मानिसले जे जति गरेको छ र जे जति गर्न खोजेको छ त्यो

○ यो लेख लेखिकाले थारू महा–सम्मेलनमा पाठ गरेकी थिइन् ।

त्यो शिक्षाकै आधारमा सम्पन्न हुने हुँदा संसारले यसलाई महत्वपूर्ण ठानी यसको क्षेत्र विस्तार गर्दै लाने कोशिश निरन्तर जारी राखेको छ । शिक्षा यस्तो महत्वपूर्ण चीज भएता पनि थारू जाति यसबाट धेरै पर बस्न खोजेको हुन्छ । उनीहरूमा शिक्षाले भ्रष्टता ल्याउँदछ भन्ने धारणा अझै पनि भएको जस्तो देखिन्छ, किनभने सम्पन्न र क्षमता भएका मानिसहरूले पनि आफ्ना सन्तानहरूलाई पढाई लेखाइबाट बञ्चित गरी राखेका हुन्छन् । अतः थारू जातिको विकास र बुद्धि बढाउन सकेसम्म द्रुत गतिले शिक्षाको प्रचार गर्नु अति आवश्यक छ । थारू जातिलाई शिक्षाको महत्व दर्शाई सहयोगात्मक भावना राखी प्रत्येक परिवारलाई आफ्नो बाल बालिकाहरूलाई शिक्षा दिनतर्फ प्रोत्साहित गर्न आवश्यक देखिन्छ । त्यस्तै, थारू सामाजिक प्रगतिको अर्को ठूलो बाधा बाल विवाह पनि थारू जातिलाई पछाडि तान्नमा ठूलो भूमिका खेलेको पाइन्छ । विवाहको महत्व ठूलो भएता पनि यसको प्रयोग उचित रूपमा हुन सकेको छैन । विवाह भन्ने के हो ? किन गरिन्छ ? विवाहकहिले र कसरी गर्नु पर्दछ भन्ने कुराहरू-लाई ध्यानमा राख्दै नराख्दै उनीहरू केटा-केटीको विवाहलाई समस्याको रूप लिई यी समस्यालाई सकेसम्म चाँडै समाधान गर्ने उद्देश्य राखी त्यसलाई आफ्नो ठूलो कर्तव्य सम्झेर केटा-केटीलाई बाल विवाह गर्ने पद्धति अपनाएको पाइन्छ । यसले गर्दा मानिसलाई अगाडि बढ्नुको सट्टा झन झन पछाडि तिर जानु स्वभाविक हुन्छ । थारू जातिलाई शक्ति क्षीण बनाउन र बुद्धिको विकासमा यो नासमझीले ठूलो बाधा पुऱ्याएको छ । अतः थारू जातिको विकासका लागि यस्तो घिनलाग्दो, प्रतिगामी पद्धतिलाई पूर्णरूपेण बन्द गरी दिनु नै समय र परिस्थितिको माग हो ।

यो कुरा सर्व विदितै छ कि नारी जातिले मानिसको विकासका लागि प्रमुख भूमिका खेलेको हुन्छ । तर यो दुःखको कुरा हो कि हाम्रो जस्तो पिछडिएको समाजमा नारी जातिको केहि महत्व नै महशूस हुदैन । हाम्रो जातिमा नारीहरू सत्रौं शताब्दीमा किनबेच गरिने दासहरू जस्ती छन् । अहिले पनि हाम्रो जातिमा नारीलाई किन्ने र बेच्ने कन्यौती प्रथा प्रचलित नै छ । जुन समाजमा आज पनि नारीको कुनै हक छैन, जसलाई किन्ने र बेच्ने गरिन्छ त्यो समाजमा नारीको कसरी उन्नति हुन सक्ला र समाज–उत्थानमा नारीले के योगदान दिन सक्छिन ? नारीले जस्तो सुकै दुःख सहेर पनि पुरुषले बनाएको सीमा भित्र नै बस्नु पर्ने सामाजिक नियमको बाध्यत्ताले गर्दा यस समाजमा नारीको उत्थान हुन सकेको छैन । अहिले पनि जहाँ पुरुषहरू नारीहरूलाई मनोरञ्जनको साधन मात्र मान्दछन् र सोही उद्देश्यको पूर्ति निमित्त नारी जातिको आवश्यकता सम्झछन् भने त्यस्तो समाज पनि विकास गर्न सक्ला भन्ने धारणा राख्नु मुर्ख्याइँ मात्र हुनेछ । मानिस भएर मानिसलाई डर देखाएर पिटेर आफ्नो बसमा राख्नु नै मानवता हो र ? मानिस कुनै पशु त होइन कि उसलाई बाँधेर आफ्नो अधिकारमा राख्न सकिन्छ । हाम्रो जातिमा पुरुषहरू नारीलाई आफ्नो अधिकार भित्र राखेर गौरव महसूस गर्नु एउटा ठूलो भूल होइन भने के हो ? नारीहरू पुरुषको अधीनमा बस्नु पर्ने हुँदा उनीहरूको इच्छाको र अधिकारको हनन हुन्छ जसले गर्दा उनीहरूको व्यक्तित्वको विकासमा अवरोध पुग्न जान्छ । नारीहरूले आफ्ना काय र गुणको क्षमता देखाउन नपाउँदा थारू जातिको विकासमा वाधा पुग्न जानु स्वभाविकै हो । अतः नारी जातिलाई तिनको अधिकार दिनु हाम्रो भूल हुने छैन बरू यो सराहनीय कार्य हुन जानेछ । यसले गर्दा समस्त थारू जातको विकासमा पूर्णरूपले सहयोग पुग्ने छ । विश्वमा विभिन्न जातिहरूको विकास त्यो जातिमा उनीहरूले





दिएको नारीको अधिकारले गर्दा भएको हो । हाम्रो विकास पनि तब मात्र सम्भव हुनेछ जब हामी पनि नारीलाई त्यति नै सम्मान र अधिकार दिने छौं । हाम्रो जातिमा स्वभाविक रूपले डाह, द्वेश इत्यादि विशेष रूपमा देखा पर्दछन्, जसले गर्दा विकासको क्रम रोकिन जान्छ । मानिसले मानिससित डाह गऱ्यो भने संसारको विकास हुँदैन, देशले देशसित डाह गऱ्यो देश बन्दैन, जातिले जातिसित डाह गऱ्यो भने जातिको विकास हुँदैन भन्ने कुरा निर्विवाद छ । यिनै, लक्षणहरू विशेष रूपले हाम्रो जातिमा देखा परेका छन् र त्यसैले जातीयताको विकास हुन सकेको छैन । सहयोगात्मक भावनाको कमी र इर्ष्यालु भावना राख्ने प्रवृत्तिको विकास प्रति दिन बढ्दै गएको तथ्य आज हाम्रो जातीय विकासको बाटोमा अवरोधक भएर बिस्फोटक रूप लिएर उभि दिएको छ– यसले गर्दा जातिको विकासमा दिन प्रति दिन ह्रास हुँदै गएको र त्यसको अस्तित्व नै मेटिने जस्तो लक्षण देखा पर्न आएको छ । यस्ता प्रवृत्तिहरूको निराकरण गर्नु पर्दछ भन्ने कुरा महसूस गरिए पनि अगाडि बढेर कार्य गर्ने मानिसको पूर्ण रूपमा अभाव छन् । यो जातिको मुख्य पेशा खेती देखिन्छ । खेती गर्न दिन रात परिश्रम गरेर पनि दुई छाक राम्रोसित खान पाइन्न, जिउ ढाक्ने लुगा पाइन्न । के यस्ता मानिसहरू समाज र जातिको विकासका लागि सहायक सिद्ध हुन सक्लान ? तिनीहरूले प्रशस्त मिहनत गरेर पनि पेट भर्न नसक्दा ऋणका लागि बिभिन्न ठाउँमा पुग्नु परेको हुन्छ । थारूहरू जन्मदेखि नै सोझा हुनाले प्रशस्त ऋण उपलब्ध गर्न सक्ने क्षमता राख्दै छन्; तर खर्च पनि त्यस्तै बढी गर्नु मुनासीब देखिदैन । थारू समाजको आर्थिक अवस्था बिग्रिदै गइरहेको कुरा सबैलाई थाहै छ । अनावश्यक वस्तुहरूमा खर्च गर्न थारूहरूको स्वभाव भइसकेको छ । यस बाहेक उनीहरूको ठूलो कमजोरी रक्सी र जुवा हो । यी दुर्व्यवहारलाई उनीहरू मनोरञ्जन र स्फूर्तीका साधन मान्दछन् । उनीहरूले भात खान नपाउन तर रक्सी पिउनै पर्छ र आदतले गर्दा मनोरञ्जनका लागि जुवा खेल्नै पर्छ । हरेक किसिमले प्रत्येक क्षेत्रमा यसरी बिग्रिदै गइरहनुको मुख्य कारण यी दुवै पनि हुन् । यी बाधा हरूलाई हटाउने प्रयत्न गरियो भने पनि केही हदसम्म यो जातिको बिकासमा तीव्रता आउन सक्दछ ।

विभिन्न किसिमका आन्तरिक र सामाजिक दवाब-हरूका साथसाथै केही वाह्य दबाव र अत्याचारले पनि विकासको क्रममा बाधा पुऱ्याएको हामीले पाउँदछौ । थारू जाति स्वभावैले अथवा शिक्षाको कमिले गर्दा सोझो भएको हुनाले प्रशासनका विभिन्न अङ्गको अन्याय र दबाव अत्याचार, पुलिस प्रशासनको दबाव, जिल्ला प्रशासन र भूमि प्रशासनको अनाबश्यक दबाव र अत्याचारले गर्दा जातिको अथवा व्यक्तिको उन्नति गर्ने उत्साह दिन प्रति दिन ह्रास हुँदै गएको देखिन्छ । थारू जातिमा एउटा अर्को प्रवृत्ति पनि देखिन्छ र त्यो हो– अहंको भावनाले नै मानिस भित्र बिकृति ल्याउँदछ र जहाँ विकृतिको समावेश भयो कि व्यक्ति आफ्नो विकास गर्न असमर्थ हुन्छ । यसरी थारू जातिको विकासको क्रममा आइ दिने यी बिभिन्न बाधाहरूले विकासलाई दीर्घ कालसम्मका लागि शायद स्थगित गरी दिएको छ कि ? जबसम्म यी बाधाहरू हाम्रो समक्ष रही रहन्छन्, थारू जातिको बिकास स्वभाविकरूपले स्थगित नै रहने छ ।

अतः यी बाधाहरूलाई हटाउन र सकेसम्म निमूँल पार्न हाम्रो समस्त जातिको सक्दो योगदान र सहयोगको आवश्यकता छ, खास गरेर हाम्रो बुद्धिजीवी वर्गले साहस पूर्ण रचनात्मक कार्यहरू गरेर थारू जातिको विकास गर्ने बेला आइसकेको छ । अब पनि हामीले ढिला सुस्ती गऱ्यौं

भने केही समयपछि हाम्रो अस्तित्व नै मेटिने छ। त्यसैले हामी सबैले निष्ठावान भई शपथ लिएर अगाडि बढ्नु परेको छ। हामीले आफ्नो अतीतको ख्याल राख्दै रुढीवादी बिचारधारा त्यागेर दृढ संकल्प गरी अघि सर्नु परेको छ – यसैमा हाम्रो र हाम्रो समाजको कल्याण छ।

—थारू संस्कृति, चतुर्थ पुष्प-पृष्ठ ५३–५६







# पूर्वज

—कृष्ण पाखिन

मेरो बाजे,
साहु र जीम्दारीको ऋणले
थिचेर तिनीहरूकै घरमा
कर्मी काम, हलो जोत्दा जोत्दै
गोरुले भीरबाट खसालेर मरे।
मेरो बा,
बाजेको ऋण चुक्ता गर्न
साहुहरूलाई खुसी तुल्याउन
आसामको जंगलमा
मच्छेर र डाँठसँग जुधेर
एकदिन आराको मुढाले किचीएर
रगत छादेर मरे।
मेरो दाजु,
पूर्वजले लिएको ऋण तीनं
बन्दकी घर, र एक कान्ला बारी उकास्न
मुंगलान तिर गएको' रे,
लाहुरे हुन गएको' रे !
मलाई थाहा छैन - मेरा बा र बाजेका अनुहारहरूको
मेरा दाजुका व्यहोराहरू
सुन्दछु, केवल सुन्दछु मात्र
बाजेले लिएको ऋण अझै बांकी छ' रे।
बन्धकी तमसुकहरू अझै फेरिदैं छन्' रे।
कहिले काहि साहुहरू मेरो घरमा आई हप्काउने गर्छन
र सुनाउने गर्छन–
"यो घर डिक्री गर्छु
यो बारी अरूलाई बेच्छु
कि नियममा छिर्नु,
कि ऋण तिर्नु"
लाग्छ यो कस्तो ऋण हो ?
लाग्छ यो कहिले को ऋण हो ?
तिर्दा तिर्दै बाजे मरेर गए
'बा' पनि तिर्न भन्दा मुढ़ाले किचिएर मरे
पुर्वजलाई उकास्न दाजु पनि लाहुरे भए
अझै तमसुकहरू फेरिदैछन्।
अझै रकमहरू दोबर हुँदैछन्।
त्यसैले म न्यायको ढोका घचघचाउन
प्रत्येक अड्डाहरूमा बिन्ती पत्र
प्रत्येक अदालतमा उजूरी
न्यायधीस र हाकीमलाई
बिहान र बेलुकी 'हजुर' भन्दा भन्दा
थाकी सके, पाकी सकें
तै पनि न कानूनको बुदाहरूले भेटन् सक्यो
न नियमको दफाहरूले,
म जस्ता गरीबहरू

म जस्ता न्याय माग्नेंहरू
सधैं नै जेल र नेल
अड्डा र अदालत
पाएको पाएकै छन् । धाएकै धाएकै छन् ।
कुन देशमा शोषण छैन ?
कुन समाजमा वर्ग छैन ?
न्यायलयको कठघरामा उभिएर सोधेको छु
निरूत्तर छन् अड्डा र अदालतहरू
बन्द छन् न्यायका पुस्तकहरू
त्यसैले ए साथीहरू ! ए न्याय प्रेमी जनताहरू !!
आऊ, यी ढोंगीन्यायलयहरू भत्काउँदै
आउं यी ब्वाँसाहरूको समाजलाई बिगार्दै
एक गठ भै, एक स्वर बनाउदै
परेड खेलौं ! मार्च पास गरौं !
'हाम्रो पूर्वजको आत्माको लागि
हामी सबैको मुक्तिको लागि
हाम्रो हातले कानून बनाउनका लागि
हाम्रो हातले देश बनाउनको लागि ।



# म मान्दै मान्दिन

**रचना:– मन्जुल शर्मा**
**संगीत:– शंभु राई**

मानिस छुत अछुत हुन्छ म भन्दै भन्दिन
जाति र पाती छुट्याउने रीतलाई म मान्दै मान्दिन
हो ··· म मान्दै मान्दिन ।

ठूलो र सानो भेदभाव धनिले बनाए २
गरीबको श्रम लुटेर खाने चलन चलाए
मानिस भई मानिसको रगत म खाँदै खाँदिन
जाति र पाती ···

काम ठग्नेलाई पूज्ने यो चलन अलिछले बनाए २
काम गर्नेलाई हेप्ने चलन दुष्टले चलाए
काम ठग्ने ठूलो काम गर्ने सानो म भन्दै भन्दिन
जाति र पाती ··· ···



## शाङ देत्नी यङा ?

पीडाको तस्वीर देखेका छौं ?
अत्याचारको पदचाप सुनेका छौ ?
चित्कारको रङ्ग कस्तो हुन्छ ?
कवि मौन छ !
यातनाको संगीत सुनेका छौ ?
क्रुरताको कला बारे केही थाहा छ ?
शासकको उपनाम के हो ?
कवि चुप छ !

—बिमल निभा, 'लहर' पृष्ठ- २३

जहाँ जन्म्यौं त्यो देशलाई
आज अन्धकार बनाउन्नौं
अन्याय, अत्याचार, भ्रष्टारको
जरो उखेल्ने छौं ।
हामी बालक फुमी रहे
हिमाल फुक्ने छ
हामी बालक आज नचम्के
शहीदले आँसु बहाउनै छ ।

—सुनिता अमात्य, 'प्रगति' पहिलो प्रकाशन, पृ.- १४





# रावण राक्षस

**– उमानाथ शाश्त्री सिन्धुलीय**

हिन्दू संस्कृतिको अभिन्न अङ्ग भैसकेको राम चरित्रमा लंका नगरीका राजा रावणले प्रतिनायकको स्थान पाएका छन् । पौराणिक कथनमा पुलस्त्यका छोरा विश्रवा ऋषिले राक्षसकन्या कैकसीसीत विवाह गरेको पाइन्छ । सोही भनाई उनैका छोरा हुनाले रावण राक्षस हुनगएका हुन् भन्ने छ । अहिलेको चलन अनुसार राक्षसनीको छोरो राक्षस हुनु नौलो कुरो पनि भएन । तर रामायण आजको नभएर धेरै पुरानो कथा हुनाले त्यो बेलाको चलन के थियो ? भनेर एक छिन घोरिनु मनासिब होला । पौराणिक कथामा नै हामी कपिलदेव महर्षि, व्यास महर्षि र आस्तिक मुनि क्रमशः क्षत्राणी, मछिनी र नागिनीका छोरा भएर पनि बाबुहरू ब्राह्मण हुनाले ब्राह्मणमै गनिएका पाउछौं । यस्ता प्रमाण अरू पनि प्रशस्त छन् । यसबाट पौराणिक कालमा बाबुको जात अनुसार सन्तानको जात मानिने कुरा प्रष्ट देखिन्छ । यौटा रावण मात्रै बाबुको नभएर आमाको जातमा गनिन्छन् भने त्यसको कारण अर्कै कुनै हुनसक्छ ।

यौटै मानव सन्तानमा कोही देवता र कोही राक्षस केका आधारमा भये ? भन्ने कुरामा नै पहिले अनेक तर्क गर्न सकिन्छ । मैले चांहि "उषा" वर्ष- १ अंक – ६ को "राम र रावण" शीर्षकमा पौराणिककै आधार लिएर 'मानिस नै आफ्नो कृत्यद्वारा देवता र राक्षस हुन सक्छ' भन्ने उल्लेख गरेको थियें । यसको पुष्टि मार्कण्डेय पुराण अध्याय १५ श्लोक ६२ ले पनि गर्छ 'नरस्य यस्य कठिन मनो बालातुरादिषु । वृद्धेषु च न त मन्ये मानुषं राक्षसो हि सः' अर्थात जुन मानिसको मन बालक, रोगी र वृद्धमा दयालु नभएर कठोर हुन्छ त्यसलाई मानिस भनिदैन त्यो राक्षस नै हो । यसरी निर्दयी र अत्याचारी मानिस राक्षस गनिन्छ । तर पनि रावण त्यस्ता किसिमका राजा थिये भन्न सकिदैन । उनका राज्यमा पदलोलुप आफ्नै भाइ विभीषण बाहेक कुनै पनि प्रजा असतुष्ट भएको देखिदैन । रामसित परेको घोर घमासानमा सबै जसोले आत्मबलिदान गरेर उज्ज्वल राजभक्ति देखाएका छन् । राजा निर्दयी भएको भए यो कुरा अवश्य सम्भव हुने थिएन ।

राक्षस जाति छुट्टै मान्ने हो भने ऐतिहासिक तथ्य अनुसार भारत वर्षका आदिवासी र आगन्तुकहरूका बीच पुस्तौं सम्म चलेको संघर्षलाई प्रमाण मान्न सकिन्छ । त्यो

बेला एकले अर्कालाई होच्याउने उद्दश्यले त्यस्तै खाले नाम राखेको पनि थाहा लाग्छ । जस्तै गत्यर्थक 'अर' धातु (अर गतौ) बाट निष्पन्न आर्य शब्दले डुबुवा भनेर आगन्तुकलाई हेला.गरेको र राक्षस शब्द क्रूरताको प्रतीक प्रयोग गरेर आदिवासीलाई तुच्छ बनाएको पाइन्छ । आगन्तुकहरू निकै बाठा थिये । आफूलाई प्रयोग गरिएको आर्य शब्दको सम्मान सूचक परिभाषा बनाये । त्यस्तै आफू सत्वगुणी देवता, दुष्मनहरू तमोगुणी राक्षस भनेर प्रचार गरे । उही पेय वस्तुलाई आफूले पिउँदा अमृत र विरोधीले पिउँदा मदिराको संज्ञा दिएर छुट्टाछुट्टै गुणको सिद्ध गरे ।

आदिवासीहरूले अर्कै किसिमका संशोधन गरे । आत्मबल बढाउन मान्ने गरेको इष्ट देवतामा परिवर्तन भयो । 'रूद्र' नामको भयङ्कर देवता र महाकाली नामकी उस्तै भयङ्कर शक्तिको कल्पना गरियो । सर्पको गहना, विषको आहारा, माऊ निधारमा अग्निको ज्वाला, मानिसका टाउकाको माल, मुर्दाका हातहरूको कछाड, जीउ भरी मसानको खरानी, पहेंला विकराल लट्टा, नाङ्गो र कालो मुष्टे शरीर, साँढे र सिंह वाहन (सवारी) ई सबै भयङ्करताका प्रतीक हुन् । मुण्डमाला (टाउकाहरू) को अर्को अर्थ पनि छ । त्यो बेला आर्यहरूका विरोधी जसलाई अनार्य पनि भनिन्छ ले आपना जातिको राजा चुन्ने प्रणालि टाउकाकै आधारमा अपनाएका थिए । शिकारलाई महत्वपूर्ण पेशा मान्ने हुंदा मासु सबैले बाँडीचुडी खाए पनि टाउको चाँहि मुख्य शिकारीको हुन्थ्यो । जसको अनुकरण हाम्रो समाजले पनि आजसम्म गरिरहेकै छ । देवतालाई बली चढाएको बोका पाठीको टाउको समेत पुजाहारी (काट्ने मानिसको हक हुन्छ । त्यस्तै टाउका जो संग बढी जम्मा हुन्थे त्यो नै राजाको निर्वाचनमा विजयी हुन्थ्यो । अतः आफ्ना इष्ट देवतालाई टाउकाको माला पहिराउनु विशेष श्रद्धाको परिचायक पनि भयो ।

यसरी यौटै भूमिमा वसोवास भएका दुई जाति विशेषको सँधै भैरहने सङ्घर्ष असह्य भएर पछि-पछिका बुद्धिमानहरूले मेल-मिलाप बनाएर शान्ति स्थापना गर्ने कैयूँ युक्ति निकाले । जसमध्म यौटा इष्ट देवटा साजा तुल्याउने काम पनि हो । रूद्र र महाकलीको अर्को नाम शिव पार्वती (कल्याणकारी) दिएर उनीहरूको उग्ररूप प्रलयकालका निमित्त मात्र हो भन्ने प्रभावकारी ब्याख्या सुरू गरे । आर्यतर्फका अलि कडा स्वभवका दुर्वासा ऋषिलाई शिवको अवतार माने । परशुरामलाई शिवले आफ्नो हतियार "धनु" पुरस्कार दिएको कथा जोड़े । कैयूँ आर्यहरू शिवको भक्ति गर्ने भए । हरि (आर्यका देवता विष्णु) र हर (अनार्यका देवता रूद्र) को एकीकरण गरेर हरिहर मूर्ति खडा गरे, हरिहर क्षेत्र नामको तीर्थस्थान घोषित भयो । अर्को 'स्त्री रत्नं दुष्कुलादपी' भन्ने धर्मशाश्त्रको आविष्कार गरेर राक्षसहरू सँग वैवाहिक सम्बन्ध पनि जोडिन थाल्यो । यै सिल-सिललामा विश्वस्रवा ऋषिले कैकसीसित विवाह गरेको हुनुपर्छ ।

काँढो झिकेर पनि बिझेको ठाउँमा हत्तपत्त दुख्न छोड्दैन । कुतौल पर्दा त्यै घाउ फेरी गाँकिन सक्छ । त्यस्तै बाहिरी मेलमिलाप बढ्दै जाँदा पनि आर्य र अनार्यको मनोमालिन्य पछि सम्म संलिन सकेन । कहिले काँहि त्यो आन्तरिक वैमनस्यले प्रकटरूप लिएर सङ्घर्ष मचाइ हाल्थ्यो । कारण विवेक र घमण्ड दुबै मनुष्यमै रहने गुण हुन् । विवेकशील मनुष्य शान्ति चाहन्छ भने घमण्डी मानिस अशान्ति पनि रूचाउँछ । जनबल, धनबल र मानबल अभिमानका जन्मदाता हुन् । त्यै अभिमानले घमण्ड बढाउँछ । अतएव जसले स्वर्ग नामको अमरावती राजधानी भएको सम्पन्न राष्ट्रको अधिकार जिइसकेका थिए, जसलाई अरूहरूले देवता भनेर आदरका दृष्टिले हेर्थे उनीहरू र भूदेव कहिने ब्राह्मणहरू मध्ये यो आर्य र अनार्यको सामञ्जस्य मन नपराउने पनि धेरै थिये । त्यो बेला दानव भन्ने छुट्टै समुदाय थियो । आजको भाषामा उनीहरूलाई वैज्ञानिक भन्नु पर्छ । देवता र ब्राह्मणका दृष्टिमा ई पनि घृणित थिये । यिनका ठूल-ठूला अविष्कारहरू नरसंहारकारी पनि हुन्थे । यिनीहरूले आत्मसन्मानको निमित्त राक्षसै पक्ष लिन पर्दथ्यो । यस्तो वैज्ञानिक वर्ग पाएका कतिपय राक्षसहरू पनि सामञ्जस्य भन्दा सघर्ष नै मन पराउने देखिन्थे । यसैले शान्त प्रेमीहरूको प्रयास बेलाबेला असफल हुन्थ्यो ।





विश्वस्रवा ऋषिका अघिल्ली पत्नी पट्टीका अर्का छोरा थिये । जसको नाउँ कुबेर हो । उनी पहिले लंकापुरीका राजा थिये । पछि भाइ रावण वालिक भएर राजा हुने इच्छा गर्दा त्यो राजापाठ उनीलाई सुम्पी आफू चाँहि हिमालय प्रान्तमा अलकापुरी नामको अर्को राज्य खडा गरेर राजकाज गर्न थाले । त्यसको नजिकै अमरावती राज्य पर्थ्यो । त्यतै सम्पर्क बढ्यो । स्वर्गका राजा देवेन्द्रले उनलाई आफ्नो खजाञ्ची बनाएर लोक पालको पदवी समेत दिई ठुलो सम्मान गरे । कुवेर आफ्नो बाबुको निर्देशन अनुसार शिवका उपासक थिये तापनि मौतिने मावली प्रति हार्दिक श्रद्धा नहुनु प्रकृति सिद्ध थियो । यै मेलो पाएर देवराजले आफ्नो सिद्धान्त - अनुकूल बनाउन हात लिएका होलान । किनभने बाबुको योजना असफल पार्न छोराबाट सजिलो हुन्छ ।

उता राजा भएपछि रावणलाई विश्व विजयी बन्ने अभिलाषाले कुत्कुत्यायो । उता लङ्काबाट प्रस्थान गरेर नजिकै पर्ने दण्डकारण्य नामक जङ्गलमा पुगे । यो जंगल ठूलो र धेरै आर्य ऋषिहरूका आश्रमले भरिएको थियो । त्यो बेलाको चलन अनुसार गृहस्थीहरूको बसोबासमा मात्र राजाको अधिकार हुन्थ्यो । अतः यो ठाउँ स्वतन्त्र थियो । तर रावणले यसलाई आफै राजा भएको यौटा राज्यनै ठहराये । उनको विजयनअभियान यहींबाट सुरू हुने कार्यक्रम बन्यो । विश्व विजयी बन्न यौटै राज्य पनि आफ्नो अधिनबाट छुट्नु हुंदैन भन्ने कुरा सम्झाएर ऋषिहरूसंग विजयाभिलाषी राजाले कर बुझाउन आग्रह गरे । ऋषिका प्रतिनिधिले हामी बनवासीसंग सम्पति छैन, कर बुझाउन सक्तैनौ न बुझाएर के भो र ? हामी तपाईसग युद्ध गर्न सक्दैनौ आफ्नै अधिनका मात्र सक्नु हुन्छ भने जवाफ दिये । करको संख्या परिमाण वा वस्तु निश्चित नगरीकन तपाईहरूलाई जे जस्तो सुविधा पर्छ त्यो अवश्य दिनुपर्छ नत्र यो देश मेरो हो भनेर कुन आधारले मान्ने ? इत्यादि प्रकारको ढिपी रावणले पटक्कै छोड़ेनन् । कुरा चर्कदै गयो । देवताहरूको संकेत अनुसार ई ऋषिहरूले लङ्का पातको अभियान असफल पार्ने उद्देश्य लिएको सत्य छर्लङ्ग हुन थाल्यो । ऋषिले आवेगमा आएर कर नलिई नछोड्ने हौ भने हामीसंग शरीरको रक्त सिवाय केही छैन त्यै जम्मा गरिदिन्छौ लेउ भनेर घुर्की देखाए । राजाले पनि रिस खप्न नसकी कर वापत दिएको रक्त नै सही नलिई छोड्दिन भन्ने हुंकार गरे ।

जोसाजोसमा सबै ऋषिहरूले आफाफ्ना शरीरबाट रक्त निकाली यौटा कलसमा भरि दिये । लङ्कापतिले त्यो रक्त कलस रूमालले ढाकेर लङ्का लगे । यो भयंकर विद्रोहको बीज हो र कडासेकडा विष भन्दा पनि विषालु हुन सक्छ भन्ने विश्व सले आफ्ना खोपीमा लुकाएर राखे । रानी मन्दोदरीलाई समेत यो भयंकर विष हो खोलेर तिमीले पनि नहेर्नु भष्म हुनेछौ भनेर ढाँटे । परिणाम

स्वरूप 'रावण राक्षस हो' भनेर ऋषिहरूले जोडतोडसंग प्रचार गरे। यस राजद्रोह दमनका निम्ति राजा पनि पछि परेनन्। ऋषिहरू ठाउँ छोडेर भागे प्रचार झन प्रभावकारी भयो। अन्ततोगत्वा रावणको गणना राक्षसमा भै छोड्यो। बाध्य भएर उनले मावलीको पक्ष लिनै पऱ्यो 'सर्वान्ते ब्राह्मणो रिपु:' भन्ने उक्तिलाई सार्थक पारेर चाँडैनै यिनको सर्वनाश भयो।



# महाँशोपक

– डी. के. राई

चुसे ती शोषकहरूले हाम्रा पसीना रगतको,
पारे वियोग हैरान गराए गरीब सबको।
भुलाए मानिसलाई अनेकौं जालहरू रचेर,
बसे 'रामगीता' 'महाभारत' इत्यादि रचेर।

छुट्याए मानिसलाई छुत अनि अछुत भनेर,
गरे वर्गीकरण ब्राह्मण, क्षेत्री, वैश्य अनि शूद्र।
बस्ने भए ब्राह्मण अब कुशासकमा मालिक बनेर
क्षेत्रीहरू बसे देश रक्षा गर्ने भएर।

पने भो मारलौ वैश्य अनि शूद्र भनिनेहरूलाई
पाउ पुज्नु पर्ने भयो सबले ब्राह्मणहरूलाई
अब बने यिनीहरू समाजमा महाका शोषक,
मानिसके दिक्क यिनी देखि अब त सब लोक।

## आवश्यक छ कुराहरू

मानसिक स्वास्थ्यका लागि आफ्नो दैनिक जीवनमा तलका छ कुराहरूलाई ध्यानमा राख्ने गर्नुहोस: 'के ?', 'कहाँ ?', 'कहिले ?', 'किन ?', 'कसरी !' र 'को ?'।

— मनोविज्ञान डाइजेष्ट, वर्ष–१, अङ्क–१, पृष्ठ–५



# नेपाल बहूभाषीय, बहूजातीय र बहूधर्मावलम्बी राष्ट्र हो

– परतु

नेपाल राष्ट्र एउटै जाती, एउटै मात्र भाषा र एउटै मात्र धर्म भएको राष्ट्र होइन, यहाँ जातीमा भिन्नता छ, भाषामा विभिन्नता छ र त्यस्तै विभिन्न धर्मावलम्बीहरू भएका जनता छन्। त्यसैले नेपाल राष्ट्र भन्ने बित्तिकै सबै जाती, सबै भाषा–भाषी र विभिन्न धर्मप्रति विश्वास भएको जनताहरूको साझा राष्ट्र हो भन्ने बुझिन्छ। यो कुरालाई इमान्दारीपूर्वक बुझ्न नसकेसम्म नेपाल राष्ट्रको सर्वांगीन विकास हुनुपर्छ भन्ने कुरालाई पनि बुझ्न सकिन्दैन। नेपालको राष्ट्रियता र राष्ट्रिय एकताको विकासको निमित्त पनि यही कुरा मूल रूपले बुझ्न जरूरी छ। नेपाल राष्ट्र भन्नाले विश्व मानचित्रमा एक सीमाबद्ध एउटा एकाई हो भने देशभित्र यो पनि एउटा विविधताको संगठन हो। नेपालको एकता भनेको सबै कुरामा एकता होइन, अनेकताका बीचमा मात्र एकता हो। यीनै यथार्थ कुरालाई नेपालका शासकहरू र नेपाली जनताले राम्ररी बुझ्नु जरूरी छ।

नेपालको संविधानमा नेपाली भाषालाई राष्ट्र भाषा बनाइएको छ, हिन्दूधर्मलाई राज्य धर्म भनी मानिएको छ र नेपालमा शाहवंशको शासन छ। यी तीनवटा कुरालाई लिएर एक वर्गबाट नेपालमा नेपाली भाषा एउटाको मात्र विकास गर्न र गराउन पाइन्छ, हिन्दूधर्म एउटालाई मात्र राज्यबाट संरक्षण प्राप्त हुन्छ र खासजातीको मात्रै सबै क्षेत्रमा वाहुल्यता हुनुपर्छ भन्ने किसिमको कुरालाई प्रोत्साहित र प्रचार गराउनमा संलग्न देखिन्छ। कोही यस्तो हुनुहुन्न भन्ने कुरालाई पनि थाहापाई वा नपाई उपरोक्त किसिमको सुनियोजित कार्यक्रम बनाई नेपालको विभिन्न भाषा, जाती र जातीय सँस्कृतिलाई जसरी भएपनि दमन र निर्मूल गर्ने जस्ता षडयन्त्र गर्दै आइरहेको देखिन्छ। यस किसिमको षडयन्त्र र षडयन्त्रकारीहरू नेपालमा पृथ्वी नारायण शाहबाट एकीकरण भएको धेरै वर्ष पछि मात्र देखिएको भएता पनि आज सम्म पनि नेपालको शासकीय क्षेत्रमा ती षडयन्त्रकारी तत्त्वहरूको प्रभाव बाँकी नै भएको देखिन्छ। नेपालको राष्ट्रिय एकतामा यो नै सबभन्दा डरलाग्दो खतरा हो यसले राष्ट्र भित्र विभिन्न जाती प्रति असमान व्यवहार गरी दमन भइ राखेको मात्र होइन, विभिन्न जातीय भाषाहरूको विकास

हुन नसकेको मात्र पनि होइन, यसले राष्ट्रको स्वतन्त्रता र राष्ट्रिय अखण्डता प्रति नै गम्भीर खतरा भइरहेको कुरा स्वतःष्पस्ट छ। यसकारण नेपालको राष्ट्रिय स्वतन्त्रता र देशको सार्वभौमसत्ताको सुरक्षाको निमित्त पनि देशमा भएका सबै जाती र भाषाहरूप्रति समानता, यसको साथै विभिन्न धर्माबलम्बीहरू बीच समानता कायम हुने किसिमको व्यवस्था गरी नेपाल देश सबै जातीको साझा हो भन्ने भावना जागृत गराई राष्ट्रिय एकतालाई मजबूत गर्दै लैजानु नै नेपालको सबभन्दा ठूलो राष्ट्रिय आवश्यकता हो।

यही राष्ट्रिय आवश्यकतालाई बेवास्ता गर्दै जातीगत, भाषागत र धार्मिक स्वतन्त्रता र समानताको जन अधिकारलाई दमन गर्दै लैजाने नीतिनै आजसम्म प्रशासकहरूले अपनाउँदै आएका छन्। सरकारको यीनै गलत नीतिको विरोध गर्दै राष्ट्रियता र राष्ट्रिय एकताको सम्वर्द्धनको निमित्त आजसम्म विरोधको आवाजलाई वुलन्द पार्दै आऊने समूहहरूलाई जातीवदी, साम्प्रदयिक आदि गलत आरोप लगाई दमनको निमित्त घोर साम्प्रदायिक तत्वहरूले एक किसिमको षडयन्त्रकारी संगठित आन्दोलन नै गर्दै आइरहेको देखिन्छ। उदाहरणको निमित्त केही समय अघि एक साप्ताहिक पत्रिकाले मङ्गोल जातीय सम्मेलनको समीक्षात्मक समाचारमा नेवाः जाती प्रति गरिएको आक्षेप र डा० कमलप्रकाश मल्लको अन्तर्वार्तालाई लिएर गरिएको साहित्यिक टिप्पणीले त्यस किसिमको साम्प्रदायिक तत्वहरूको मखुण्डो उदाङ्गो भएको छ। यस किसिमको राष्ट्रघातक भावनाको प्रचार गरी तनाव पैदा गर्न खोज्ने तत्वहरूको मुकाबिला नेवाः जातीले मात्र होइन राष्ट्रियताको हिमायती सबै नेपालीहरू एक भएर गर्नु पर्दछ। पत्र पत्रिकामा यस किसिमको जातिगत आक्षेपको प्रचार गरेर पत्रिकालाई आफ्नो निजी स्वार्थ मात्र पूरा गर्ने नभई राष्ट्रिय एकताको भावनामा समेत कुठाराघात गर्न सकिन्छ। तर यस किसिमको राष्ट्र विरोधी तत्वहरूलाई पनि श्री ५ को सरकारबाट कुनै किसिमको कारवाही किन गरिएनन् भन्ने प्रश्न नै सबभन्दा दुःखद तथा बुझ्नु पर्ने कुरा हुन्। विभिन्न जाती र धर्म भएको राष्ट्रलाई पनि नेपाल वहूभाषीक, वहू जातीय र वहू धर्माबलम्वी राष्ट्र होइन भन्ने किसिमको प्रचार गर्दै हिंड्ने तत्वहरूलाई कारबाही गरी देशको यथार्थ स्थितिलाई जनताको अगाडि राखी दिनु कुनै पनि राष्ट्रिय सरकारको सबभन्दा ठूलो कर्तव्य हो। राष्ट्रिय एकता जस्तो महत्वपूर्ण र गम्भीर विषयमा पनि मौन भएर बसिरहनु सरकार आफ्नो उत्तरदायित्व देखि पन्छिन खोज्नु वा असफल हुनु हो। यस किसिमको स्थितिलाई नियन्त्रण गर्न नखोज्नुको परिणाम देशमा साम्प्रदायिक दङ्गा हुन सक्छ, देश टुक्रिन सक्छ, राष्ट्रको स्वतन्त्रता र सार्वभौमिकता हराउन सक्छ! यस कारण, राष्ट्रको गठनको यथार्थ कारणलाई बुझेर राष्ट्रियता र राष्ट्रिय एकताको निमित्त सरकार र जनताले पनि नेपालको विभिन्न जाती, भाषा र धर्मलाई समान व्यवहार गरी नेपाल राष्ट्रको उन्नति प्रगतिलाई अघि बढाउनु पर्दछ। यस कार्यमा कुनै किसिमको वाधा व्यवधान आएता पनि यसको समाधान पनि हामी आफै मिलेर गर्न सक्नु पर्दछ। वर्तमान सम्विधानमा नेपाली भाषालाई राष्ट्र भाषा र हिन्दू धर्मलाई राज्य धर्मको मान्यता दिनुको कारणले नेपाली राष्ट्रियताको बिकासमा अवरोध ल्याउँछ भने सम्विधानमा संसोधन पनि गर्नु पर्ने हुन आउँछ। राष्ट्रको सविधान राष्ट्रिय रक्षाको निमित्त हो। यसलाई कसैले पनि बिर्सनु हुन्न। त्यसैले संविधानमै नेपाली जनताको बीचमा समानताको भावना जागृत गराउन नसकि भएमा संविधानमै पनि परिवर्तन अनिवार्य हुन आउँछ, जुन भनिरहनु पर्ने कुरा होइन।

संविधानलाई हतियार बनाएर नेपालमा एक भाषा, एक जाती र एक धर्मको प्रभूत्व कायम गर्ने कार्य हुँदै आएको छ। यही कार्य अन्तर्गत रेडियो नेपालले आफ्नो राष्ट्रिय जिम्मेदारीतालाई बिर्सेर नेपाली भाषा यौटालाई मात्र प्रचार प्रसारको माध्यम वनाइरहेछ। दैनिक समाचार प्रसारण देखि लिएर विकास सम्बन्धी विभिन्न कार्यक्रम, संगीतको साथै विज्ञापन सेवा समेत एकै भाषामा मात्र सञ्चालन गर्दै आइरहनुको अर्थ रेडियो नेपालले देशका अन्य जाती र भाषागत अस्तित्वलाई वहिस्कार गर्ने गरिरहेको प्रमाण हुन्। केहि समय अघिसम्म "फूलवारी" नामक कार्यक्रम सञ्चालन गरेर हप्तामा छ वटा भाषाको एक एक गीत प्रशारण गर्ने काम रेडियो नेपालबाट भयो। तर, यो पनि रेडियो नेपालको हप्ताको ५,७७० मिनेटको कार्यक्रममा खस भाषा बाहेक अन्य भाषालाई हप्ताको ३ मिनेट मात्र स्थान दिनु निश्चयनै अन्य जाती र भाषा भाषीका जनताप्रति घोर अन्याय, अपमान र अवहेलना भएको सम्झनु पर्दछ। राष्ट्र, राष्ट्रियता र राष्ट्रिय एकता भन्ने अर्थ नै शायद रेडियो नेपालका सञ्चालकहरूले बुझेका छैनन्, यदि बुझेका भए के जानजानी नै बुझ पचाएर राष्ट्रको विरोधमा क्षमा दिनै नसकिने जघन्य अपराध गर्दै आइरहेका हुन् त?

यस्तै किसिमको अपराध राजकीय प्रज्ञा प्रतिस्थान, त्रि० वि० वि० लगायत अन्य सरकारी संरक्षण प्राप्त निकायहरूले पनि खसभाषालाई राष्ट्र भाषाको बिल्ला लगाएर भाषा साम्राज्य स्थापना गर्ने नियतले अन्य जातीय भाषालाई अवहेलना गर्नको साथै दमन गर्ने कार्य गरिरहेछन्।

यतिमात्र होइन, राष्ट्रिय जनमत संग्रह जस्तो भाग्य निर्णय गर्ने कार्यमा समेत प्रचारको माध्यम नेपाली भाषा मात्र गर्नु र गराउनु अन्य जातीका जनताको निमित्त दूर्भाग्य हो भन्नु पर्दछ। यदि खस बाहेक अन्य भाषा भाषी जनताको पनि यो राष्ट्र साझा हो भने उनीहरूले नबुझ्ने भाषाबाट मात्र प्रचार प्रसार गरेर जनमत सङ्कलन गर्न खोज्नु मातृभाषा नेपाली भाषा (खस भाषा) नहुने बहुसंख्यक जनता प्रति अक्षम्य धोखा हो। उनीहरूको सबभन्दा महत्वपूर्ण नागरिक अधिकारको हनन पनि हो। यस किसिमको षडयन्त्र यो राष्ट्रमा हुन्जेल सम्म राष्ट्रको उन्नति प्रगति मात्र होइन, राष्ट्रिय स्वतन्त्रता र अखण्डतालाई पनि बलियो पार्न सकिन्दैन, त्यसैले नेपाल राष्ट्र वहू भाषिक, वहूजातीय र वहू धर्मावलम्बी राष्ट्र हो भन्ने यथार्थ सत्यलाई नै पनि पहिले सबैले बुझ्न आवश्यक छ र यदि कसैले यस किसिमको समझदारीपूर्ण एकतामा कसैले विरोध र आक्रमण गर्न आउँछ भने त्यसलाई नेपाल राष्ट्र र नेपाली जनताको साझा शत्रु मानी त्यो संग मुकाबिला गर्ने र त्यसलाई पराजित गर्ने काम पनि हुनैपर्छ।

(नेपाल भाषा पत्रिकाबाट)

—अनु. **सुदन खुसः**



## भाषा

भाषा जातीको जन्मसिद्ध अधिकार हो
भाषा नै स्वजातीको प्राण हो।
भाषा कुनै जातीको नभए
त्यो जाती नै निष्प्राण हो।

**डी. के. राई** 'बैशालु' विशेषाङ्क, पृ-६३

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**कर्णबहादुर राई**
खावा, भोजपुर
[भू.पू. गृह, पञ्चायत; वन सहायकमन्त्री]

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**भीमप्रसाद् गौचन**
[म्याग्दी, धवलागिरी]
स्थानीय विकास सहायकमन्त्री
पुल्चोक फोन: २१९४१

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछौं ।

प्रधानपंच **भक्तिमान देवान** तथा
[भद्रपुर, झापा]
भद्रपुर नगर पञ्चायत परिवार/ फोन: ९५
[भू. पू. भूमिसुधार सहायकमन्त्री]

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारमा हार्दिक-शुभकामना टक्र्याउँछु ।

**दूतप्रसाद् गुरूङ**
स्याङजा
[भू. पू. वन, सहायकमन्त्री]
काठमाण्डौ फोन: १३५३०

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**खड्गबहादुर गुरूङ**
पोखरा
[भू. पू. भूमिसुधार सहायकमन्त्री]

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**डिल्लीशेर राई**
हलेसी–खोटाङ
(भू. पू. गृह पञ्चायत, निर्माण तथा यातायात, रक्षा स.मन्त्री)
कालिकास्थान, काठमाण्डौ, फोन: १२३२०

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**मानबहादुर जबेगू**
खुँगा-पाँचथर
[भू. पू. सामान्य प्रशासन स० मन्त्री]

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**लबरू राना थारू**
दिखातभूली पञ्चायत, कञ्चनपुर
(भू. पू वन, भूमिसुधार, निर्माण तथा यातायाय स.मन्त्री)



श्री ५ वडामाहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

रा.पं.स. **गोपालचन्द्र सिंह राजवंशी**
[महेशपुर-झापा]
[भू.पू. स्वस्थ्य, कृषि, सिंचाई; उद्योग वाणिज्य स.मन्त्री]
घट्टेकुलो, काठमाण्डौ / फोन: १६८०१

३२ औं शुभजन्मोत्सवको सु–अवसरमा
श्री ५ वडामहारानी सरकारमा
मंगलमय शुभ – कामना व्यक्त गर्दछु ।

**शालिग्राम चौधरी**
[वदालपुर, वर्दिया]
स्वास्थ्य सहायकमंत्री
काठमाण्डौ / फोन: १३५७०

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**आङदण्डी लामा**
फाप्लु-सोलु
[भू पू वन सहायकमन्त्री]
बानेश्वर, काठमाण्डौ / फोन: १६३०३

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

रा.पं.स. **नरबहादुर गुरूङ**
थप्रेक, तनहुँ
[भू. पू. जल तथा विद्युत, सहायकमन्त्री]

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**भीमबहादुर बुढाथोकी**
भारसे, गुल्मी
[भू. पू. गृह, पंचायत सहायकमन्त्री]
काठमाण्डौ / फोन: १५७९५

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**ओमकार गौचन**
[बागलुङ बजार]
शिक्षा सहायकमन्त्री [भू. पू. खाद्य, कृषि तथा सिंचाई; सहायकमन्त्री] केशरमहल, काठमाण्डौ/ फोन: २१०३४

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**श्रीप्रसाद् बुढाथोकी**
३/३४ 'घ' पुल्चोक, ललितपुर फोन: २१६३२
[भू. पू. निर्माण तथा यातायात सहायकमन्त्री]

श्री ५ वडामहारानी सरकारको
३२ औं शुभ–जन्मोत्सवको
पुनीत अवसरमा
मौसूफ सरकारप्रति हार्दिक शुभ-कामना चढाउँछु ।

**सन्तकुमार चौधरी**
रा. पं. स , चितवन
[भू पू स्वास्थ्य; भूमिसुधार सहायकमन्त्री]
कमलादी, काठमाण्डौ/ फोन: १६४०८

